करार ऐन, २०५६

लालमोहर र प्रकाशन मिति

२०५७।३।१४

**२०५७ सालको ऐन नं. ३**

**संशोधन**

**१. केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४** २०६४।५।१९

## करार सम्बन्धी कानूनको व्यवस्था गर्न बनेको ऐन

प्रस्तावना : करार सम्बन्धी प्रचलित कानून व्यवस्थालाई समयानुकूल बनाउन वाञ्छनीय भएकोले, श्री ५ महाराजाधिराज वीरेन्द्र वीर विक्रम शाहदेवको शासनकालको उनन्तीसौं वर्षमा संसदले यो ऐन बनाएकोछ ।

### परिच्छेद-१

### प्रारम्भिक

१. **संक्षिप्त नाम र प्रारम्भ :** (१) यस ऐनको नाम "करार ऐन, २०५६" रहेकोछ ।

(२) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **परिभाषा** : विषय वा प्रसंगले अर्को अर्थ नलागेमा यस ऐनमा,-

(क) "करार" भन्नाले दुई वा दुईभन्दा बढी पक्ष बीच कुनै काम गर्न वा नगर्नका लागि भएको कानून बमोजिम कार्यान्वयन गर्न सकिने सम्झौता सम्झनु पर्छ ।

(ख) "प्रस्ताव" भन्नाले कुनै काम गर्न वा नगर्नका लागि स्वीकृति पाउने अभिप्रायले एक व्यक्तिले अर्को व्यक्ति समक्ष राखेको प्रस्ताव सम्झनु पर्छ ।

(ग) "स्वीकृति" भन्नाले प्रस्तावका कुराहरु प्रस्तावकले जुन अर्थमा लिएको छ सो कुराका सम्बन्धमा प्रस्तावित व्यक्तिले सोही अर्थमा दिएको सहमति सम्झनु पर्छ ।

(घ) "प्रतिफल" भन्नाले प्रस्तावमा उल्लिखित काम गरी दिए वा नगरी दिए बापत कुनै काम गरी दिने वा नगरी दिने गरी गरेको कबुल सम्झनु पर्छ ।

### परिच्छेद-२

### करारका पक्ष तथा प्रस्ताव र स्वीकृति

३. **करार गर्न योग्य व्यक्ति** : (१) देहायका व्यक्ति बाहेक अरु जुनसुकै व्यक्ति करार योग्य हुनेछ :-

(क) सोह्र वर्ष उमेर पूरा नभएको,

(ख) होस ठेगानमा नभएको ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि प्रचलित कानून बमोजिम कुनै खास करार गर्न अयोग्य व्यक्ति त्यस्तो करार गर्न अयोग्य भएको मानिनेछ ।

(३) उपदफा (१) बमोजिम करार गर्न अयोग्य व्यक्तिका तर्फबाट निजको हितको लागि निजको संरक्षकले करार गर्न सक्नेछ ।

(४) यस दफामा अन्यथा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै खास विषयमा यस ऐन बमोजिम करार गर्न अयोग्य व्यक्तिले समेत करार गर्न सक्ने गरी प्रचलित कानूनले व्यवस्था गरेकोमा त्यस्तो विषयमा त्यस्तो व्यक्ति समेत करार गर्न योग्य भएको मानिनेछ ।

४. **पक्षहरु स्वायत्त हुने** : यस ऐनको अधीनमा रही करारको स्वरुप तथा विषयवस्तु छनौट गर्न, प्रतिफल, प्रतिफलको मात्रा, करारका शर्त तथा करार उल्लंघन भए बापत उपचारको प्रकृति निर्धारण गर्न र करार बमोजिमको विवाद समाधान गर्ने उपाय निश्चित गर्न करारका पक्षहरु स्वायत्त हुने छन् ।

५. **करार भएको मानिने** : एक व्यक्तिले अर्को व्यक्ति समक्ष राखेको प्रस्तावमा त्यस्तो प्रस्तावित व्यक्तिले स्वीकृति जनाएपछि करार भएको मानिनेछ ।

६. **करार भएको स्थान** : (१) प्रस्तावकले जुन स्थानमा स्वीकृति पाउनका लागि प्रस्ताव पठाएको हो सोही स्थानलाई करार भएको स्थान मानिनेछ ।

(२) उपदफा (१) बमोजिम स्थान नखुलाइएको अवस्थामा प्रस्तावकले स्वीकृति पाएको स्थानलाई करार भएको स्थान मानिनेछ।

७. **प्रस्ताव र स्वीकृति पुरा भएको मानिने** : (१) प्रस्ताव पठाएको कुरा प्रस्तावित व्यक्तिले थाहा पाएपछि प्रस्ताव पठाउने कार्य पूरा भएको मानिनेछ ।

(२) प्रस्तावमा आफ्नो स्वीकृति जनाई प्रस्तावित व्यक्तिले प्रस्तावक समक्ष पठाएको स्वीकृति प्रस्तावकले पाएमा प्रस्तावकको हकमा र प्रस्तावमा प्रस्तावित व्यक्तिले स्वीकृति दिएको कुरा प्रस्तावकलाई थाहा भएमा प्रस्तावित व्यक्तिको हकमा स्वीकृति दिने कार्य पूरा भएको मानिनेछ ।

(३) प्रस्तावमा प्रत्यक्ष रुपमा स्वीकृति नजनाए पनि प्रस्तावित व्यक्तिले प्रस्तावमा उल्लिखित कुनै शर्त पालना गरेमा वा प्रस्तावमा उल्लिखित प्रतिफल, लाभ वा सेवा स्वीकार गरेमा वा अन्य कुनै व्यहोराबाट स्वीकृति जनाएमा पनि प्रस्तावमा स्वीकृति प्रदान गरेको मानिनेछ ।

(४) प्रस्तावकले यो समयसम्म इन्कार गरिएको सूचना नपाएमा प्रस्ताव स्वीकार गरेको सम्झने छु भन्ने व्यहोराको प्रस्ताव राखेको भए सो समयसम्म इन्कारीको सूचना नपठाएको भए प्रस्ताव स्वीकार गरेको मानिने छैन ।

८. **प्रस्ताव वा स्वीकृति रद्द गर्न सकिने** : (१) प्रस्तावकले आफ्नो प्रस्ताव सूचनाद्वारा रद्द गर्न सक्नेछ ।

तर प्रस्ताव रद्द गरिएको सूचना पाउनुभन्दा अगावै प्रस्तावित व्यक्तिले प्रस्तावमा स्वीकृति दिई सकेको सूचना प्रस्तावकले पाइसकेको भए सो प्रस्ताव रद्द हुने छैन ।

(२) प्रस्तावित व्यक्तिले आफूले पठाएको स्वीकृति सूचनाद्वारा रद्द गर्न सक्नेछ ।

तर स्वीकृति रद्द गरिएको सूचना पाउनुभन्दा अगावै प्रस्तावकले स्वीकृतिको सूचना पाई सकेको भए स्वीकृति रद्द हुने छैन ।

(३) प्रस्तावमा इन्कारी जनाई सूचना पठाउने व्यक्तिले प्रस्तावमा पुनः स्वीकृति दिई सूचना पठाउन सक्नेछ ।

तर यसरी इन्कारी जनाइएको वा स्वीकृति दिइएको सूचनाहरुमध्ये इन्कारी जनाइएको सूचना अगावै पुगेमा करार भएको मानिने छैन । स्वीकृति जनाइएको सूचना अगावै पुगेमा करार भएको मानिनेछ ।

(४) प्रस्ताव पठाई सकेपछि उपदफा (१) बमोजिमको सूचना पठाएकोमा वा स्वीकृति पठाई सकेपछि उपदफा (२) बमोजिमको सूचना पठाएकोमा वा प्रस्तावमा इन्कारी जनाई सकेपछि उपदफा (३) बमोजिमको सूचना पठाएकोमा त्यस्ता सूचनाहरु सम्बन्धित व्यक्तिले एकैबखत पाएमा करार भएको मानिने छैन ।

९. **प्रस्ताव रद्द भएको मानिने** : देहायको कुनै अवस्थामा प्रस्ताव रद्द भएको मानिनेछ :-

(क) प्रस्तावकले प्रस्ताव स्वीकृत गरेको सूचना यो समयसम्म पाउँ भनी प्रस्ताव राखेकोमा सो समयसम्ममा प्रस्तावित व्यक्तिले स्वीकृति जनाएको सूचना प्रस्तावकले प्राप्त नगरेमा ।

(ख) खण्ड (क) बमोजिम स्वीकृतिको सूचना पठाउनु पर्ने समय उल्लेख नभएकोमा प्रस्तावित व्यक्तिले मनासिव माफिकको समयभित्र स्वीकृति जनाएको सूचना प्रस्तावकलाई नदिएमा ।

(ग) प्रस्ताव राखेपछि स्वीकृति प्राप्त गर्नुभन्दा अगावै प्रस्तावकको मृत्यु भएमा वा निजको होस ठेगानामा नरहेमा ।

(घ) दफा ८ बमोजिम प्रस्ताव रद्द गरिएमा ।

(ङ) स्वीकृति दिएपछि त्यस्तो स्वीकृति प्रस्तावकले प्राप्त गर्नु अगावै प्रस्तावित व्यक्तिको मृत्यु भएमा वा निजको होस ठेगानामा नरहेमा ।

(च) प्रस्तावित व्यक्तिले प्रस्तावको कुनै कुरा परिवर्तन गरी वा कुनै शर्त राखी स्वीकृत गरेमा ।

(छ) प्रस्तावित व्यक्तिले प्रस्ताव स्वीकृत गर्नु अघि कुनै कार्य वा कुनै शर्त पूरा गर्नु पर्ने गरी प्रस्ताव राखिएकोमा त्यस्तो कार्य वा शर्त पूरा नगरी स्वीकृत गरेकोमा ।

१०. **सर्वसाधारण समक्ष राखिएको प्रस्ताव बमोजिमको करार** : (१) कुनै व्यक्तिले विज्ञापन गरी सो विज्ञापनमा उल्लिखित कुनै काम गरेमा यस्तो पारितोषिक दिनेछु भनी सार्वजनिक रुपमा प्रस्ताव राखेकोमा सो विज्ञापन बमोजिमको काम गर्ने व्यक्तिलाई त्यस्तो विज्ञापन प्रकाशित गर्ने व्यक्तिले विज्ञापनमा उल्लिखित पारितोषिक दिनु पर्नेछ ।

तर विज्ञापनमा उल्लिखित काम त्यस्तो विज्ञापनको जानकारी विना गरेको रहेछ भने त्यस्तो व्यक्तिले पारितोषिक पाउने छैन ।

(२) उपदफा (१) बमोजिमको प्रस्तावमा उल्लिखित काम एक वा एकभन्दा बढी व्यक्तिले गरेमा जुन व्यक्तिले पहिले गरेको छ सोही व्यक्तिले मात्र पारितोषिक पाउनेछ ।

तर दुई वा दुईभन्दा बढी व्यक्तिहरुले एकै समयमा प्रस्तावमा उल्लिखित काम गरेमा त्यसरी काम गर्ने सबैले पारितोषिक बराबर बाँडी लिन पाउने छन् । पारितोषिक बाँड्न नमिल्ने रहेछ भने सो बिक्री गरी आएको रकम त्यस्ता व्यक्तिहरुलाई बराबर बाँडी दिनु पर्नेछ ।

(३) उपदफा (१) बमोजिम प्रकाशित विज्ञापन बमोजिम गर्नु पर्ने कामको लागि निश्चित समयावधि तोकिएको रहेछ भने त्यस्तो समय समाप्त हुनासाथ विज्ञापन बमोजिमको प्रस्ताव रद्द भएको मानिनेछ ।

(४) उपदफा (१) बमोजिम राखिएको प्रस्ताव जुन माध्यमद्वारा प्रकाशित भएको हो, सोही माध्यमद्वारा रद्द गर्न सकिनेछ ।

(५) उपदफा (४) मा जुनसुकै कुरा लेखिएको भए तापनि प्रस्ताव रद्द गरेको सूचना प्रकाशित हुनु अगावै कसैले उपदफा (१) बमोजिमको विज्ञापन अनुसार काम गरिसकेको भएमा विज्ञापनमा उल्लिखित पारितोषिक दिनु पर्नेछ ।

तर विज्ञापन बमोजिम काम गर्ने व्यक्तिले विज्ञापनदातालाई यथासम्भव छिटो काम सम्पन्न भएको सूचना गरेको हुनु पर्नेछ ।

(६) कसैले विज्ञापनदातालाई उपदफा (१) बमोजिमको विज्ञापन अनुसार काम शुरु गरेको कुरा सूचना गरी काम शुरु गरेको रहेछ भने त्यसरी काम गर्ने व्यक्तिलाई विज्ञापन रद्द हुँदासम्म गरेको कामका लागि उचित पारिश्रमिक दिनु पर्नेछ ।

११. **अप्रत्यक्ष करार** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा उल्लेख भए तापनि देहायका अवस्थामा देहाय बमोजिम करार भएको मानिनेछ :-

(क) यस ऐन वा अन्य प्रचलित कानून बमोजिम करार गर्न अयोग्य व्यक्तिलाई वा त्यस्ता व्यक्तिले पालन पोषण गर्नु पर्ने कुनै व्यक्तिलाई निजको सामाजिक हैसियत सुहाउँदो कुनै चीज वस्तु वा सेवाको आवश्यकता पूरा गरी दिएकोमा सो पूरा गरिदिने व्यक्तिलाई निजले दिएको चीज वस्तु वा सेवाको मूल्य त्यस्तो असमर्थ व्यक्तिको सम्पत्तिबाट भराई दिने ।

(ख) कुनै व्यक्तिले प्रचलित कानून बमोजिम तिर्नु पर्ने कुनै रकम तिरे वा नतिरेको कुरामा सरोकार हुने व्यक्तिले त्यस्तो रकम आफूले तिरी दिएकोमा सो रकम तिर्ने व्यक्तिलाई निजले तिरेको जति रकम तिर्नु पर्ने व्यक्तिको सम्पत्तिबाट भराई दिने ।

(ग) कुनै व्यक्तिले कुनै व्यक्तिलाई कुनै कुरा दिएकोमा वा कुनै काम लगाएकोमा सो काम कुरा अनुसारको मूल्य वा पारिश्रमिक दिने ।

(घ) कानून बमोजिम राख्न पाउने अरुको कुनै सम्पत्ति आफ्नो कब्जामा राखेकोमा सो सम्पत्ति नासो सरह राख्ने ।

(ङ) भूलले कसैले कुनै रकम दिएकोमा सो रकम निजलाई फिर्ता गर्ने ।

१२. **सांयोगिक करार** : (१) भविष्यमा कुनै घटना घटेमा कुनै काम गर्ने वा नगर्ने गरी करार भएकोमा त्यस्तो घटना नघटेसम्म त्यस्तो करारबाट कुनै दायित्व सृजना हुने छैन ।

(२) भविष्यमा कुनै व्यक्तिले कुनै खास काम गरेमा करार भएको मानिने गरी करार भएकोमा त्यस्तो व्यक्तिले त्यस्तो काम नगर्ने वा गर्न नसक्ने गरी कुनै काम कारबाही गरेमा त्यस्तो करारबाट कुनै दायित्व सृजना हुने छैन ।

(३) भविष्यमा कुनै अनिश्चित घटना नघटेमा कुनै काम गर्ने वा नगर्ने गरी करार भएकोमा त्यस्तो घटना घट्न असम्भव भएपछि मात्र त्यस्तो करार बमोजिमको दायित्व सृजना हुनेछ ।

(४) भविष्यमा कुनै निश्चित समयभित्र कुनै घटना घटेमा कुनै काम गर्ने वा नगर्ने गरी करार भएकोमा त्यसरी निर्धारित समयभित्रै वा निर्धारित समय समाप्त भएपछि सो घटना घट्न असम्भव भएपछि त्यस्तो करार बदर भएको मानिनेछ ।

(५) भविष्यमा कुनै घटना कुनै खास समयभित्र नघटेमा कुनै काम गर्ने वा नगर्ने गरी करार भएकोमा त्यस्तो समयभित्र त्यस्तो घटना नघटेमा वा सो समयभित्र त्यस्तो घटना नघट्ने निश्चित भएमा त्यस्तो करार बमोजिमको दायित्व सृजना हुनेछ।

**परिच्छेद-३**

**बदर हुने करार र बदर गराउन सकिने करार**

१३. **बदर हुने करार** : देहाय बमोजिमको करार बदर हुनेछ :-

(क) प्रचलित कानूनले निषेध नगरेको पेशा, व्यवसाय वा व्यापार गर्नबाट कसैलाई रोक लगाइएको करार,

तर देहायको अवस्थामा कुनै व्यापार वा व्यवसायमा रोक लगाउने गरी करार भएको मानिने छैन :-

(१) कुनै व्यापारको ख्याति खरिद बिक्री गर्ने गरी करार भएकोमा त्यस्तो ख्याति बमोजिमको व्यापार वा व्यवसाय खरिद गर्ने खरिदकर्ता र बिक्रेता बीच सम्पन्न करारमा उल्लिखित अवधि र स्थानमा त्यस्तो बिक्रेताले त्यस्तै व्यापार र व्यवसाय गर्न नपाउने गरी भएको करार,

(२) साझेदार रहुन्जेल साझेदारी फर्मको व्यापार व्यवसाय बाहेक सोही प्रकृतिको व्यापार व्यवसायका प्रतिस्पर्धी अन्य व्यक्तिहरुसंग सोही वा अन्य कुनै व्यापार व्यवसाय गर्न नपाउने गरी साझेदारहरु बीच भएको करार,

(३) साझेदारी छाडिसकेपछि साझेदारी फर्म बमोजिमको व्यापार व्यवसाय निश्चित अवधिसम्म वा निश्चित स्थानमा नगर्ने गरी साझेदारहरु बीच भएको करार,

(४) कुनै व्यक्तिले कुनै व्यक्ति, फर्म, कम्पनी वा निकायसंग गरेको करार अनुसार त्यस्तो व्यक्ति, फर्म, कम्पनी वा निकायको सेवामा छदै वा सेवाबाट अवकाश प्राप्त गरेको निश्चित समयसम्म त्यस्तो व्यक्ति, फर्म, कम्पनी वा निकायको प्रतिस्पर्धी अन्य व्यक्ति, फर्म, कम्पनी वा निकायको सेवा स्वीकार गर्न नपाउने गरी भएको करार।

(ख) प्रचलित कानूनले निषेध गरेको विवाह बाहेक अन्य विवाहमा रोक लगाइएको करार।

(ग) सर्वसाधारणले उपभोग गरिरहेको सुविधा कसैलाई उपभोग गर्नबाट रोक लगाइएको करार,

(घ) कसैले पाएको कानूनी अधिकार कुनै अड्डा अदालतबाट प्रचलन गराई पाउनबाट रोक लगाइएको करार,

(ङ) प्रचलित कानूनको विरुद्धमा भएको वा प्रचलित कानूनले निषेध गरेको कुरामा भएको करार,

(च) अनैतिक उद्देश्यको लागि वा सार्वजनिक नीति वा हितको विरुद्धमा भएको करार,

(छ) करार भएको विषय वस्तु करार गर्ने पक्षहरुलाई स्पष्ट रुपमा थाहा नभएबाट पूरा गर्न नसकिने अवस्थामा पुगेको करार,

(ज) करार गर्दाकै अवस्थामा करार पूरा गर्न असम्भव भएको करार,

(झ) मनासिब माफिकको अर्थ दिन नसक्ने भै अस्पष्ट भएको करार,

(ञ) करार गर्न अयोग्य व्यक्तिबाट भएको करार,

(ट) गैर कानूनी प्रतिफल वा उद्देश्य भएको करार ।

१४. **बदर गराउन सकिने करार** : (१)देहाय बमोजिम भएको करार सो करारबाट मर्का पर्ने व्यक्तिले बदर गराउन सक्नेछ :-

(क) करकापबाट भएको करार,

स्पष्टीकरण : कुनै व्यक्तिलाई निजको इच्छा विरुद्ध कुनै करार गराउने मनसायले निजको सम्पत्ति रोक्का राखेको वा राख्न धम्की दिएको वा निजको जिउ ज्यान वा इज्जतमा धक्का पुऱ्याउने धम्की दिएको वा प्रचलित कानून बिपरित अन्य कुनै काम गरेको वा गर्न धम्की दिएको भए करकाप गरेको सम्झनु पर्छ ।

(ख) अनुचित प्रभावबाट भएको करार,

स्पष्टीकरण :

(१) आफ्नो प्रभावमा रहेको आफ्नो इच्छानुसार काम गराउन सकिने व्यक्तिबाट आफ्ना हित वा स्वार्थका लागि कुनै अनुचित लाभ उठाउने मनसायले त्यस्तो व्यक्ति उपर पारेको प्रभावलाई अनुचित प्रभाव सम्झनु पर्छ ।

(२) खण्ड (१) को सर्वसामान्यतामा प्रतिकूल प्रभाव नपर्ने गरी देहायका व्यक्तिलाई आफ्ना प्रभावमा रहेका आफ्नो इच्छानुसार काम गराउन सकिने व्यक्ति सम्झनु पर्छ :-

(अ) आफ्नो संरक्षकत्व, संरक्षण वा जिम्मामा रहेका व्यक्ति,

(आ) वृद्धावस्था, विरामी अवस्था वा शारीरिक वा मानसिक दुर्बलताले गर्दा केही समय वा सदाका लागि आफ्नो हितको बिचार गर्न नसक्ने व्यक्ति,

(इ) आफूले आर्थिक वा पदीय दवाब पार्न सकिने व्यक्ति ।

(ग) जालसाजबाट भएको करार,

स्पष्टीकरण : करार गर्ने पक्ष वा निजको प्रतिनिधिले अर्को पक्ष वा निजको प्रतिनिधिलाई धोका दिने नियतबाट कुनै कुरा सत्य होइन भन्ने जानकारी हुँदा हुँदै सो कुरा सत्य हो भनी विश्वास दिलाएको वा विश्वास पर्न सक्ने कुनै काम कारबाही गरेको वा कुनै तथ्यका बारेमा जानकारी हुँदा हुँदै सो तथ्य जानी जानी लुकाएको वा प्रचलित कानून बमोजिम जालसाज हुने अन्य कुनै काम गरेको भए जालसाज गरेको सम्झनु पर्छ ।

(घ) झुक्याई गराएको करार ।

स्पष्टीकरण : देहाय बमोजिमको कामलाई झुक्याएको सम्झनु पर्छ :-

(क) मनासिब माफिकको आधार बेगर कुनै कुराको झुट्ठा विवरण दिएको,

(ख) कुनै पक्षलाई मर्का पर्ने गरी बहकाएको,

(ग) करारको विषय वस्तुमा गल्ती गराएको ।

(२) यस दफा बमोजिम बदर गराउन सकिने करारका हकमा देहायका कुरामा देहाय बमोजिम हुनेछ :-

(क) करार गराइएको पक्षले करारलाई बदर नगराई सो करार हुनु अघि निजको स्थिति जस्तो हुन्थ्यो सो बमोजिम गराई माग्न सक्नेछ ।

(ख) कसैले आफ्नो प्रभावमा रहेको आफ्नो इच्छा अनुसार काम गराउन सक्ने व्यक्तिसंग करार गरेकोमा त्यस्तो करार अनुचित प्रभावबाट गरिएको होइन भनी प्रमाणित गर्ने भार त्यसरी अनुचित प्रभाव पारेको होइन भन्ने पक्षमाथि रहनेछ ।

## परिच्छेद-४

## जमानत, हर्जाना तथा प्रत्याशन सम्बन्धी करार

१५. **जमानत सम्बन्धी करार** : (१) कुनै व्यक्तिले आफूले लिएको ऋण वा कबुल गरेको दायित्व चुक्ता नगरेमा वा पूरा नगरेमा तेस्रो पक्षले चुक्ता वा पूरा गरिदिने गरी करार भएकोमा जमानत सम्बन्धी करार भएको मानिनेछ ।

(२) उपदफा (१) बमोजिम तेस्रो पक्षले जमानत दिएकोमा तिर्नु पर्ने व्यक्तिले ऋण नतिरेमा वा पूरा गर्नु पर्ने दायित्व पूरा नगरेमा त्यस्तो ऋण वा दायित्व जमानत दिनेले तिर्नु वा करार बमोजिमका शर्त पूरा गरिदिनु पर्नेछ ।

(३) जमानत सम्बन्धी करार लिखित रुपमा भएको हुनु पर्नेछ ।

१६. **जमानत दिने व्यक्तिको दायित्व** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक जमानत दिने व्यक्तिको दायित्व देहाय बमोजिम हुनेछ :-

(क) दायित्व पूरा गर्नु पर्ने व्यक्तिले सो दायित्व पूरा गर्न नसकेको बखतदेखि नै जमानत दिने व्यक्तिको दायित्व सृजना हुनेछ ।

(ख) जमानत दिने व्यक्तिको दायित्व ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्ति सरह हुनेछ र तिर्नु वा पूरा गर्नु पर्ने दायित्वबाट निज मुक्त नभएसम्म जमानत दिने व्यक्ति जिम्मेवार रहनेछ ।

(ग) साहूलाई तिर्नु वा पूरा गर्नु पर्ने दायित्व तिर्नु वा पूरा गर्नु पर्ने व्यक्तिबाट उल्लंघन हुनासाथ साहूले जमानत दिने व्यक्तिबाट सो दायित्व पूरा गराउन सक्नेछ ।

(घ) कुनै ऋण वा दायित्व बापत कुनै सुरक्षण र जमानत दुवै दिएको रहेछ भने त्यसरी दिएको सुरक्षणले खामेको हदसम्म जमानत दिने व्यक्तिको दायित्व हुने छैन ।

(ङ) कानूनको परिचालनबाट ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्ति दायित्वबाट मुक्त हुँदैमा जमानत दिने व्यक्तिको दायित्व समाप्त हुने छैन ।

स्पष्टीकरण : यस ऐनको प्रयोजनको लागि "साहू" भन्नाले ऋण दिने व्यक्ति सम्झनु पर्दछ र सो शब्दले ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्तिबाट कुनै लाभ पाउने वा कुनै काम गराउन पाउने व्यक्ति समेत सम्झनु पर्छ ।

१७. **जमानत दिने व्यक्ति दायित्वबाट मुक्त हुने अवस्था** :(१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायको कुनै अवस्थामा देहायको हदसम्म जमानत दिने व्यक्ति आफ्नो दायित्वबाट मुक्त हुनेछ :-

(क) ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्तिले जमानत दिने व्यक्तिको सहमति बिना करारमा तात्विक असर पर्ने गरी करारका शर्तहरु हेरफेर गरेमा त्यस्तो हेरफेरपछि हुने कारोबारमा,

(ख) जुन विषयमा जमानत दिइएको हो सो दायित्वबाट सो पूरा गर्नु पर्ने व्यक्ति मुक्त हुने गरी करार भएमा,

(ग) साहूको काम कारबाहीले ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्ति मुक्त हुने भएमा वा ऋण मिन्हा भएमा,

(घ) साहूले ऋणीबाट लिनु पर्ने रकमभन्दा कम रकम लिई दायित्व मुक्त गर्ने वा निजलाई ऋण चुक्ता गर्न थप समय दिने वा मुद्दा नचलाउने गरी सहमति भएमा,

(ङ) साहूको कुनै काम कारबाहीबाट जमानी दिने व्यक्तिको ऋण तिर्नु पर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्ति उपरको कानूनी उपचारमा प्रतिकूल असर परेमा,

(च) ऋणीबाट लिएको कुनै सुरक्षण साहूले हराएमा वा बिगारेमा वा ऋणीलाई सो फिर्ता दिएमा त्यस्तो सुरक्षणको मूल्य बराबरको हदसम्म,

(छ) साहूलाई करार बमोजिम तिर्नु पर्ने रकम वा पूरा गर्नु पर्ने दायित्व सो तिर्नु वा पूरा गर्नु पर्ने व्यक्तिले जुन हदसम्म तिरेको छ वा पूरा भएको छ सो हदसम्म ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि साहूले जमानत दिने व्यक्ति उपर समयमा कानूनी कारबाही नचलाएको वा असूल गर्नु पर्ने रकम असूल गर्ने प्रयास नगरेको कारणबाट मात्र करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक जमानत दिने व्यक्ति आफ्नो दायित्वबाट मुक्त हुने छैन ।

(३) दुई वा दुईभन्दा बढी जमानत दिने व्यक्ति भएकोमा साहूले जमानत दिने कुनै एक व्यक्तिलाई दायित्वबाट फूर्सद दिंदैमा जमानत दिने अन्य व्यक्तिहरु आफ्नो हिस्साको दायित्वबाट मुक्त हुने छैनन् । जमानत दिने व्यक्तिहरुको दायित्वको हिस्सा छुट्याउन सकिने रहेनछ भने साहूले जमानत दिने कुनै व्यक्तिलाई फूर्सद दिंदैमा निज आफ्नो दायित्वबाट मुक्त भएको मानिने छैन ।

(४) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक दायित्व पूरा गर्ने सम्बन्धमा जमानत सम्बन्धी करार भएको हो सो दायित्व सृजना गर्ने करारका सम्बन्धमा पक्षहरु बीच कुनै विवाद उत्पन्न भएको कारणले मात्र जमानत सम्बन्धी करार बमोजिमको दायित्व पूरा गर्नबाट जमानत दिने व्यक्ति मुक्त हुने छैन ।

१८. **जमानत दिने व्यक्ति र ऋणीको सम्बन्ध** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायका कुरामा जमानत दिने व्यक्ति र ऋणीको सम्बन्ध देहाय बमोजिम हुनेछ :-

(क) जमानत दिने व्यक्तिले ऋण चुक्ता गर्ने वा दायित्व पूरा गर्नु पर्ने व्यक्तिलाई करार बमोजिम ऋण चुक्ता गर्न वा दायित्व पूरा गर्न लगाउनेछ,

(ख) ऋण वा दायित्व लिंदा ऋणीले जमानत दिने व्यक्तिलाई जमानत दिए बापत कुनै धनमाल वा सुरक्षण दिएको रहेछ भने ऋणीको मञ्जुरी बिना त्यस्तो व्यक्तिले सो धनमाल वा

सुरक्षण धितो बन्धक राख्न, बेचबिखन गर्न वा अन्य कुनै तरिकाले हक हस्तान्तरण गर्न पाउने छैन,

(ग) कुनै खास प्रयोजनका लागि ऋण वा दायित्व लिई सो बापत जमानत दिएको भए त्यसरी जमानत दिने व्यक्तिको मञ्जुरी बिना त्यस्तो ऋण वा दायित्वको उद्देश्य, स्वरुप वा त्यसका शर्तमा हेरफेर गर्न सकिने छैन ।

१९. **जमानत दिने व्यक्तिले साहुलाई प्रतिस्थापन गर्ने** : (१) जमानत दिने व्यक्तिले साहुलाई ऋणीको तर्फबाट तिर्नु पर्ने ऋण वा करार बमोजिम पूरा गर्नु पर्ने दायित्व तिरे वा पूरा गरेपछि त्यस्तो ऋण वा दायित्वका सम्बन्धमा जमानत दिने व्यक्तिले साहूलाई प्रतिस्थापन गर्नेछ र यो ऐन वा प्रचलित कानून बमोजिम साहू सरह निज उपर कानूनी कारबाही चलाउन सक्नेछ ।

(२) यस परिच्छेदमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि जमानत सम्बन्धी करार बमोजिम जमानत दिने व्यक्तिले ऋणीको तर्फबाट चुक्ता गरिदिएको ऋण वा दायित्व पूरा गर्नु पर्ने व्यक्तिका तर्फबाट पूरा गरिदिएको दायित्व बापतको सम्पूर्ण रकम तथा सोमा लाग्ने ब्याज वा अन्य कुनै शुल्क वा रकम समेत ऋणीले जमानत दिने व्यक्तिलाई तिर्नु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम ऋणीले तिर्नु पर्ने रकम नतिरेको कारणबाट कानूनी कारबाही गर्नु पर्ने भएमा वा सो बापत अन्य कुनै खर्च गर्नु परेमा त्यस्तो खर्च समेत जमानत दिने व्यक्तिले भराई लिन पाउनेछ ।

२०. जमानत सम्बन्धी करार बदर गराउन सक्ने अवस्था : देहायको अवस्थामा जमानत दिने व्यक्तिले जमानत सम्बन्धी करार बदर घोषित गराउन सक्नेछ :-

(क) साहू स्वयंले वा निजको सहमतिमा अरु कसैले जुन कारोबारको सम्बन्धमा जमानत दिएको हो सो कारोबारसंग सम्बन्धित विषयको बारेमा जमानत दिने व्यक्तिलाई गलत वा भ्रामक सूचना वा जानकारी दिई जमानत प्राप्त गरेको भएमा,

(ख) जमानतको विषय वा धनमाल वा तथ्य नै लुकाएको वा उल्लेख नगरेको भएमा,

**(ग)** कुनै तेस्रो व्यक्ति समेत जमानी रहने गरी करार भएकोमा त्यस्तो तेस्रो व्यक्तिले जमानत दिन सहमति नदिएको भएमा ।

२१. **संयुक्त रुपमा जमानत दिने व्यक्तिको दायित्व बराबर हुने** : (१) दुई वा दुईभन्दा बढी व्यक्तिहरुले संयुक्त रुपमा मिली वा छुट्टा छुट्टै कुनै ऋण वा दायित्व बापत संयुक्त रुपमा जमानत दिएकोमा त्यस्तो ऋण वा दायित्व ऋणीले पूरा नगरेमा करारमा अन्यथा व्यवस्था

भएकोमा बाहेक जमानत दिने व्यक्तिहरुले बराबरीको हिसाबले सो ऋण वा दायित्व तिर्नु वा करार बमोजिम पूरा गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम संयुक्त रुपमा जमानत दिंदा खण्ड खण्ड गरी जमानत दिएको भएमा त्यस्तो जमानत दिने व्यक्तिले आफूले जमानत दिएको खण्डको हदसम्मको दायित्व मात्र तिर्नु व्यहोर्नु पर्नेछ ।

२२. **<u>हर्जाना (इन्डेम्निटी) सम्बन्धी करार</u>** : (१)कुनै व्यक्तिले करारको कुनै पक्षको निर्देशनमा काम गर्दा त्यस्तो पक्ष वा तेस्रो व्यक्तिलाई निजको काम कारबाहीको परिणामबाट हुन सक्ने हानि नोक्सानी आफूले व्यहोर्ने गरी हर्जाना सम्बन्धी करार भएकोमा सो करारको अधीनमा रही सो व्यक्तिले देहायका कुनै वा सबै रकम हर्जाना बापत भराई लिन सक्नेछ :-

(क) करारमा उल्लेख भए बमोजिमको हर्जाना रकम,

(ख) तेस्रो व्यक्तिलाई हानि नोक्सानी परेको भए सो बापत तिर्नु व्यहोर्नु पर्ने रकम,

(ग) हर्जाना सम्बन्धी करारका सम्बन्धमा निजले दायर गरेको वा प्रतिरक्षा गरेको मुद्दामा लागेको खर्चको रकम,

(घ) खण्ड (क) देखि (ग) सम्म उल्लिखित रकम नदिएको कारणबाट मुद्दा मामिला गर्नु परेमा त्यस्तो मुद्दा मामिलामा लागेको खर्चको रकम ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक कुनै व्यक्तिले अर्को पक्षको निर्देशनमा काम गर्दा जानी जानी हानि नोक्सानी पुऱ्याउने बदनियत वा लापर्बाहीपूर्वक काम गरेको कारणबाट त्यस्तो पक्ष वा तेस्रो व्यक्तिलाई हानि नोक्सानी हुन गएमा त्यस्तो हानि नोक्सानी बापत सो काम गर्ने व्यक्ति नै जिम्मेवार हुनेछ ।

२३. **<u>प्रत्याशन (सब्रोगेशन) सम्बन्धी व्यवस्था</u>** : (१) कुनै व्यक्तिको सम्पत्ति, निजले उपभोग गरेको सुविधा वा हक वा कारोबारबाट हुने लाभ उपर तेस्रो व्यक्तिबाट हुन सक्ने हानि नोक्सानीका विरुद्ध कुनै व्यक्तिसंग करार भएकोमा त्यस्तो हानि नोक्सानी जोसुकैले गरेको भए तापनि त्यस्तो करार गर्ने व्यक्तिले नै व्यहोर्नु पर्नेछ ।

तर त्यस्तो हानि नोक्सानी अर्को कुनै व्यक्तिबाट व्यहोरिने गरी करार भएकोमा त्यस्तो व्यक्तिबाट दिलाई भराई दिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम भएको हानि नोक्सानी बापत करारमा उल्लेख भएकोमा सोही बमोजिम र उल्लेख नभएकोमा मनासिब रकम वा क्षतिपूर्ति हानि नोक्सानी भएको कारणले

प्रभावित व्यक्ति वा निजको मृत्यु भइसकेको भए निजको हकवालालाई तत्काल दिनु वा दिलाई दिनु पर्नेछ ।

(३) उपदफा (१) बमोजिम हानि नोक्सानी भएकोमा हानि नोक्सानी भएको व्यक्तिको स्थानमा उपदफा (२) बमोजिमको रकम वा क्षतिपूर्ति दिने व्यक्तिले प्रत्याशन गरेको मानिनेछ र सोही बमोजिम हानि नोक्सानी पुऱ्याउने व्यक्तिबाट त्यसरी प्रत्याशन गर्ने व्यक्तिले हानि नोक्सानी बापतको रकम वा क्षतिपूर्ति भराई लिन पाउनेछ ।

२४. **प्रत्याशन गर्ने व्यक्तिको अधिकार** : प्रत्याशन गर्ने व्यक्तिको अधिकार र दायित्व करारमा लेखिएकोमा सोही बमोजिम र नलेखिएकोमा देहाय बमोजिम हुनेछ :-

(क) जुन व्यक्तिलाई हानि नोक्सानी पुगेको हो सो व्यक्तिको सम्पूर्ण हक प्रत्याशन गर्ने व्यक्तिमा सर्नेछ ।

(ख) खण्ड (क) बमोजिम प्रत्याशन गर्ने व्यक्तिले हानि नोक्सानी पुगेको व्यक्तिलाई बुझाएको रकम वा मनासिब माफिकको क्षतिपूर्ति र सो बापत मुद्दा मामिला गर्नु परेमा सो खर्च समेत सो हानि नोक्सानी गर्ने व्यक्ति वा सो सम्बन्धमा कुनै करार भएको रहेछ भने त्यस्तो करार गर्ने पक्षबाट भराउन पाउनेछ ।

## परिच्छेद-५

## नासो सम्बन्धी करार

२५. **नासो सम्बन्धी करार** : एक व्यक्तिले अर्को व्यक्तिलाई आफूलाई नै फिर्ता दिने वा निजले अह्राए बमोजिम हस्तान्तरण वा बिक्री गर्ने गरी कुनै धनमाल राख्न दिएकोमा नासो सम्बन्धी करार भएको मानिनेछ ।

तर पाँच हजार रुपैयाँभन्दा बढी मूल्य पर्ने धनमाल नासो राख्दा लिखत गर्नु पर्नेछ ।

**स्पष्टीकरण** : यस परिच्छेदको प्रयोजनको लागि "धनमाल" भन्नाले कुनै चल सम्पत्ति र त्यस्तो सम्पत्तिमा रहेको अधिकार समेत सम्झनु पर्छ ।

२६. **नासो लिए दिएको मानिने** : (१) नासो लिने व्यक्तिले नासो राख्न दिएको धनमाल प्राप्त गरेपछि नासो लिने दिने काम पूरा भएको मानिनेछ ।

(२) कुनै धनमाल पहिलेदेखि कुनै व्यक्ति वा निजले अख्तियारी दिएको व्यक्तिले आफ्नो जिम्मा वा कब्जामा लिई राखेकोमा त्यस्तो धनमाल निजले नासो सरह लिएको मानिनेछ ।

२७. **नासो राखिएको धनमालको विवरण खोलिनु पर्ने** : (१) नासो राख्न दिने व्यक्तिले नासो राख्न दिएको धनमालमा कुनै खराबी भएको कारणले सो धनमाल प्रयोग गर्न नहुने वा त्यसबाट कुनै हानि नोक्सानी हुन सक्ने वा त्यसको संरक्षणको निमित्त छुट्टै व्यवस्था वा प्रबन्ध गर्नु पर्ने भएमा निजलाई थाहा भएसम्मका कुराहरु नासो लिने व्यक्तिलाई जानकारी दिनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम जानकारी दिनु पर्ने कुरा थाहा हुँदा हुँदै जानकारी नदिएमा नासो लिने व्यक्तिलाई सो धनमाल वा सोको कारणबाट भएको हानि नोक्सानी नासो दिने व्यक्तिले व्यहोर्नु पर्नेछ ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि कुनै धनमाल भाडामा दिएको वा धितो वा बिक्रीको लागि दिएकोमा सो धनमालको प्रयोग गर्दा सो धनमालको खराबीको कारणबाट कुनै हानि नोक्सानी भएमा सो धनमालमा भएको खराबी सम्बन्धमा नासो दिने व्यक्तिलाई कुनै जानकारी नभए तापनि त्यस्तो हानि नोक्सानी निजले व्यहोर्नु पर्नेछ ।

२८. नासो लिने व्यक्तिको दायित्व : (१) नासो लिने व्यक्तिले नासो लिएको धनमाल करारमा उल्लेख भएका शर्त बमोजिम र त्यसरी उल्लेख नभएकोमा निजको आफ्नै धनमाल सरह हेरबिचार तथा सुरक्षा गर्नु पर्नेछ ।

(२) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक उपदफा (१) बमोजिम हेरविचार तथा सुरक्षा गर्दा गर्दै पनि नासो लिइएको धनमाल हराएमा, चोरिएमा, बिग्रेमा, नासिएमा, घटेमा वा सो धनमालमा दैवी परेमा नासो लिने व्यक्तिले त्यस्तो धनमाल फिर्ता बुझाउनु पर्ने छैन ।

तर नासो लिने व्यक्तिको लापर्बाही वा बदनियतबाट वा करारका शर्त बमोजिम हेरबिचार वा सुरक्षा नगरेको कारणबाट सो धनमाल हराएमा, चोरिएमा, बिग्रीएमा, नासिएमा, घटेमा वा नोक्सानी भएमा निजले सो धनमाल वा त्यसको मूल्य बराबरको रकम नासो दिने व्यक्तिलाई दिनु पर्नेछ ।

(३) नासो लिने व्यक्तिले नासो लिएको धनमाल करार बमोजिम प्रयोग गर्ने अधिकार नभई प्रयोग गरेमा वा करारका शर्त विपरित प्रयोग गरेमा त्यस्तो प्रयोगबाट नासो लिएको धनमाल बिग्रेमा, हानि नोक्सानी भएमा, नासिएमा, घटेमा वा नोक्सानी भएमा नासो लिने व्यक्तिले नासो दिने व्यक्तिलाई त्यसको क्षतिपूर्ति दिनु पर्नेछ ।

(४) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक नासो लिने व्यक्तिले नासो लिएको धनमाल आफ्नो धनमालसंग मिसाउन हुँदैन ।

तर नासो लिने दिनेको सहमतिले नासो लिएको धनमालमा नासो लिनेले आफ्नो धनमाल मिसाएको रहेछ भने त्यस्तो धनमाल तथा सोबाट प्राप्त आम्दानीमा दुवैको आ-आफ्नो हिस्सा बमोजिमको अनुपातमा हक लाग्नेछ ।

(५) नासो लिनेले नासो दिनेको सहमति बिना नासोको धनमालसंग आफ्नो धनमाल मिसाएको रहेछ र त्यसरी मिसाइएको धनमाल छुट्याउन सकिने रहेछ भने त्यस्तो मिसाएको आ-आफ्नो मालमा निजहरुको आ-आफ्नो हक कायम रहनेछ र त्यसरी मिसाइएको धनमाल छुट्याउन लागेको खर्च र त्यस्तो धनमाल मिसाउँदा नासो दिनेलाई कुनै नोक्सान भएको रहेछ भने सो समेत नासो लिनेले व्यहोर्नु पर्नेछ ।

(६) नासो लिनेले नासो दिनेको सहमति बिना नासोको धनमालसंग आफ्नो धनमाल मिसाएकोमा उपदफा (५) बमोजिम छुट्याउन नसकिने भएमा नासो दिनेले मिसाइएको धनमालबाट आफ्नो हिस्सा लिन मन्जुर गरेमा निजको नासो लिनेको धनमालमाथिको हक समाप्त हुनेछ । नासो दिनेले त्यस्तो धनमालबाट आफ्नो हिस्सा लिन स्वीकार नगरेमा नासो लिनेले नासो दिनेको धनमालको क्षतिपूर्ति दिनु पर्नेछ ।

२९. **नासो लिएको धनमाल फिर्ता गर्नु पर्ने** : (१) नासो लेनदेन गर्दा निर्धारण भएको समय व्यतित भएपछि वा जुन उद्देश्यको लागि नासो राखिएको हो सो उद्देश्य पूरा भएपछि नासो लिनेले नासो लिएको धनमाल नासो दिनेलाई फिर्ता बुझाउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम धनमाल फिर्ता गर्नु पर्ने समयभित्र वा त्यस्तो समय नतोकिएकोमा सो धनमालको प्रकृति बमोजिम मनासिब माफिकको समयभित्र धनमाल नफर्काएकोमा वा नासो राख्ने व्यक्तिले फिर्ता नलिएकोमा सो मितिभन्दा पछि सो धनमाल हराएमा, चोरिएमा, बिग्रेमा, नासिएमा, घटेमा वा सो धनमालको कारणबाट नासो दिनेलाई कुनै हानि नोक्सानी भएमा जसको कारणबाट हानि नोक्सानी भएको हो सोही व्यक्तिले त्यस्तो हानि नोक्सानी व्यहोर्नु पर्नेछ ।

(३) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक एकभन्दा बढी व्यक्तिहरुको स्वामित्वमा रहेको धनमालका सम्बन्धमा त्यसका धनीहरुमध्ये कसैलाई वा निजहरुले अह्राएको व्यक्तिलाई नासो राखिएको धनमाल बुझाउन सकिनेछ र त्यसरी बुझाइएकोमा रीतपूर्वक बुझाइएको मानिनेछ ।

(४) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक नासो राखिएको धनमालबाट बढे बढाएको वा आर्जन भएको धनमाल समेत नासो दिने व्यक्तिको हुनेछ ।

३०. **अरुको धनमाल नासो राखेकोमा नासो राख्ने व्यक्ति जिम्मेवार हुने** : कसैले आफ्नो हक, अधिकार वा स्वामित्वमा नभएको धनमाल कसैलाई नासो राख्न दिएकोमा त्यसरी नासो लिएको कारणबाट नासो लिनेले तेस्रो व्यक्तिप्रति कुनै दावी वा हानि नोक्सानी वा सो नासो सम्बन्धमा कुनै खर्च व्यहोर्नु पर्ने भएमा त्यस्तो खर्च समेत नासो दिने व्यक्तिले व्यहोर्नु पर्नेछ ।

३१. **भेट्टाएको धनमाल प्रहरीलाई सूचना दिई राख्न सकिने** : कसैले कुनै धनमाल कुनै व्यहोराले भेट्टाएकोमा प्रहरीलाई सूचना दिई सो धनमाल सम्बन्धित धनी फेला नपरेसम्म आफैंसंग सुरक्षित राख्न सक्नेछ । त्यस्तो धनमालको धनी पत्ता लगाउन र त्यस्तो सामान राख्नमा लागेको खर्च सम्बन्धित माल धनीले व्यहोर्नु पर्नेछ र त्यस्तो खर्च नदिएसम्म सो धनमाल पाउने व्यक्तिले नै राख्न सक्नेछ ।

३२. **मर्मत सुधार गर्न दिएको वस्तु फिर्ता गर्नु पर्ने** : (१) कुनै धनमाल मर्मत, सुधार वा कुनै तरिकाले पुनर्निर्माण गर्न दिएकोमा त्यस्तो धनमाल मर्मत, सुधार वा पुनर्निर्माण गर्दा लागेको खर्च वा सेवा शुल्क लिई सम्बन्धित धनीलाई फिर्ता गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम दिएको धनमाल करारमा निर्धारित समयभित्र मर्मत, सुधार वा पुनर्निर्माण गरी सम्बन्धित धनीलाई फिर्ता गर्नु पर्नेछ र निर्धारित समयभित्र फिर्ता नगरेमा वा मर्मत, सुधार वा पुनर्निर्माण गर्दा थप हानि नोक्सानी पुऱ्याएमा वा पुनर्प्रयोग हुन नसक्ने गरी क्षति पुऱ्याएमा करारमा व्यवस्था भएकोमा सोही बमोजिम र नभएकोमा मनासिब माफिकको क्षतिपूर्ति सम्बन्धित धनीलाई दिनु पर्नेछ ।

(३) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि मर्मत, सुधार वा पुनर्निर्माण गर्दा सो बापत लाग्ने खर्च वा सेवा शुल्क चुक्ता नभएसम्म त्यस्तो धनमाल मर्मत, सुधार वा पुननिर्माण गर्ने व्यक्तिले राख्न सक्नेछ र त्यस्तो खर्च वा सेवा शुल्क मनासिब माफिकको समयभित्र चुक्ता नभएमा निजले सो धनमाल बिक्री गरी आफ्नो खर्च वा सेवा शुल्क असूल गर्न सक्नेछ ।

३३. **नासो लिंदा दिंदाको खर्च** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक नासो लेनदेन गर्दा नासो लिइएको धनमालको हेरबिचार तथा सुरक्षाको सम्बन्धमा लागेको खर्च नासो दिने व्यक्तिले व्यहोर्नु पर्नेछ ।

३४. **नासो सम्बन्धी करार बदर हुने** : (१) अंश मार्ने वा कुनै सरकारी दस्तूर वा बिगो कसैलाई तिर्नु बुझाउनु पर्ने रकम नतिर्ने नबुझाउने वा अन्य गैर कानूनी उद्देश्यले नासो राखिएको ठहरेमा त्यस्तो नासो लिने दिने गरी भएको करार बदर हुनेछ ।

(२) नासो लिनेले नासो लिएको धनमाल करारका शर्त बमोजिम नराखेमा नासो दिनेले सो नासो कुनै पनि बखत फिर्ता लिन सक्नेछ ।

**परिच्छेद-६**

**धितो तथा धरौट सम्बन्धी करार**

३५. **धितो वा धरौट सम्बन्धी करार** : (१) कुनै व्यक्तिले कसैलाई ऋण दिंदा त्यस्तो ऋणको सुरक्षण बापत धितो लिएकोमा वा कुनै काम गराउँदा सो काम पूरा गर्ने ग्यारेण्टीको लागि कुनै धनमाल धरौटी लिएकोमा धितो वा धरौट सम्बन्धी करार भएको मानिनेछ ।

स्पष्टीकरण : यस परिच्छेदको प्रयोजनको लागि "धनमाल" भन्नाले कुनै चल अचल सम्पत्ति तथा सो सम्पत्तिमा रहेको हक वा हक कायम गर्ने कुनै लिखत समेत सम्झनु पर्छ ।

(२) कुनै ऋण दिंदा धितो लिइएको भए सो ऋण र सोको ब्याज र कुनै काम पूरा गर्न धरौटी लिएको भए सो कामसंग सम्बन्धित अन्य खर्च तथा धितो वा धरौटी दिइएको धनमाल हेरचाह गर्नमा लागेको खर्च समेतको लागि धितो वा धरौट सम्बन्धी करार भएको मानिनेछ ।

३६. **धितो वा धरौट फिर्ता गर्नु पर्ने** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक जुन ऋणको लागि धितो राखिएको हो सो ऋण चुक्ता भएपछि वा जुन कामको लागि धरौट लिएको हो सो काम सम्पन्न भएपछि त्यस्तो धितो वा धरौट धितो वा धरौट राख्ने व्यक्तिलाई फिर्ता गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम राखिएको धितो वा धरौट खण्ड खण्डमा विभाजित भएको वा विभाजन गर्न सकिने रहेछ भने जुन खण्डको ऋण चुक्ता भएको वा काम सम्पन्न भएको हो सोही खण्डको हदसम्म त्यस्तो धितो वा धरौट फिर्ता हुन सक्नेछ ।

३७. **धितो वा धरौटी लिने व्यक्तिको अधिकार** : (१) कुनै धनमाल धितो राखी ऋण लिएकोमा सो ऋण लिने व्यक्तिले निर्धारित समयभित्र ऋण वा सोको ब्याज भए सो समेत चुक्ता नगरेमा धितो लिने व्यक्तिले कानून बमोजिम कारवाई चलाई ऋण बापत असूल उपर हुनु पर्ने रकम त्यसरी राखिएको धितो प्रचलित बजार भाउ अनुसार बिक्री वा लिलाम गरी असूल उपर गर्ने वा त्यसरी बिक्री वा लिलाम हुन नसके कानूनको अधीनमा रही त्यस्तो धितो आफ्नो स्वामित्वमा सार्न सक्नेछ ।

(२) उपदफा (१) बमोजिम धितो रहेको धनमाल धितो लिने व्यक्तिले ऋणीबाट असूल उपर गर्नु पर्ने रकमभन्दा कम मूल्यमा बिक्री भएमा त्यसरी नपुग भएसम्मको रकम ऋणीको अरु

सम्पत्तिबाट भराई लिन पाउनेछ र असूल उपर गर्नु पर्ने रकमभन्दा बढी मूल्यमा बिक्री भएमा बढी भए जति रकम ऋणीलाई फिर्ता गर्नु पर्नेछ।

(३) उपदफा (१) र (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि धितो रहेको धनमाल बिक्री भै नसकेको वा स्वामित्वमा सरी नसकेको अवस्थासम्म धितो दिने व्यक्तिले ऋण तथा सोको ब्याज र अन्य कुनै रकम तिर्नु पर्ने भए सो समेत चुक्ता गरी जहिलेसुकै पनि आफ्नो धनमाल निखनी लिन सक्नेछ।

तर निर्धारित समयभित्र रकम नबुझाएको कारणबाट धितो रहेको धनमालमा सृजना भएको थप दायित्व समेत धितो दिने व्यक्तिले व्यहोर्नु पर्नेछ।

(४) कुनै धनमाल धरौटी लिई कुनै काम गर्न जिम्मा दिएकोमा त्यस्तो काम निर्धारित समयमा पूरा नगरेमा वा नभएमा धरौटी रहेको धनमालबाट सो काम पूरा गराउन वा सो काम पूरा गराउन लागेको खर्च असूल उपर गरी लिन सकिनेछ। धरौटी रहेको धनमालबाट काम पूरा नहुने भएमा त्यस्तो नपुग भएसम्मको रकम धरौटी दिने व्यक्तिको अरु सम्पत्तिबाट भराई लिन सकिनेछ।

३८. **आफ्नो हक नपुग्ने धनमाल धितो वा धरौटी राखेमा हुने परिणाम** : (१) कसैले आफ्नो हक नभएको वा स्वामित्वमा नरहेको वा यस ऐन बमोजिम बदर हुने करार अन्तर्गत प्राप्त गरेको धनमाल कसैलाई धितो वा धरौटी दिई ऋण वा काम प्राप्त गरेको रहेछ र सो कुरा धितो वा धरौटी लिने व्यक्तिलाई थाहा रहेनछ भने त्यसरी धितो वा धरौटी लिने व्यक्तिले धितो वा धरौटी दिने व्यक्तिसंग सो बराबरको निजको हक लाग्ने धनमाल धितो वा धरौटी माग गर्न सक्नेछ र सो बमोजिम धितो वा धरौटी दिन नसकेमा धितो वा धरौटी लिने व्यक्तिले सो सम्बन्धी करार बदर गराउन सक्नेछ।

(२) बदर हुने करार अन्तर्गत प्राप्त भएको धनमाल धितो वा धरौटी रहेकोमा त्यस्तो धितो वा धरौटी दिनु अगावै त्यस्तो करार बदर भै सकेको रहेछ वा धितो वा धरौटी दिइएको धनमाल धितो वा धरौटी दिने व्यक्तिको होइन भन्ने कुरा धितो वा धरौटी लिनेलाई थाहा भएको रहेछ भने त्यस्तो धनमालमा धितो वा धरौटी लिनेको कुनै अधिकार हुने छैन र निजले असूल गर्नु पर्ने रकम वा पूरा गराउनु पर्ने काम धितो वा धरौटी दिने व्यक्तिले अन्य सम्पत्तिबाट भराई लिन पाउनेछ।

(३) धितो वा धरौटी राखिएको धनमालमा धितो वा धरौटी दिने व्यक्तिको आंशिक वा सीमित हक वा स्वामित्व रहेछ भने त्यस्तो धनमालमा धितो वा धरौटी लिने व्यक्तिको पनि सोही हदसम्म मात्र हक अधिकार हुनेछ।

३९. **<u>साहुहरु समान स्थितिमा रहने</u>** : (१) कसैले आफ्नो धनमाल धितो राखी एकपटक वा पटक पटक गरी एकभन्दा बढी साहूहरुबाट ऋण लिएको रहेछ र त्यसरी धितो राखिएको धनमालले सबै साहूहरुको ऋण चुक्ता गर्न नपुग्ने अवस्था रहेछ भने करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक त्यस्तो सुरक्षण बापत धनमाल धितो लिने सबै साहूहरु बाँकी रहेको ऋणमा समान (पारी पासु) स्थितिमा रहेको मानिनेछ र त्यस्तो धनमाल उपर सबै साहूहरुको समानुपातिक रुपमा दावी लाग्नेछ ।

(२) उपदफा (१) बमोजिम धितो दिई सकिएको धनमाल उपर भविष्यमा अर्को साहूले प्राथमिकता पाउने गरी धितो राखी गरिएको करार बदर हुनेछ । साहूले सो ऋणको सम्बन्धमा अरु साहूहरु छन् भन्ने कुरा थाहा हुँदा हुँदै त्यस्तो करार बदर हुनु अगाडि नै त्यस्तो धितोबाट ऋण असूल उपर गरी सकेको रहेछ भने सो रकम अन्य साहूलाई फिर्ता गरी निजले धितो दिनेको अन्य जायजेथाबाट असूल उपर गर्नु पर्नेछ ।

## परिच्छेद-७

## <u>वस्तु बिक्री सम्बन्धी करार</u>

४०. **वस्तु बिक्री सम्बन्धी करार** : (१) कुनै बिक्रेताले मूल्य लिई कुनै वस्तु क्रेतालाई तत्काल हस्तान्तरण गर्न वा भविष्यमा हस्तान्तरण गर्न मञ्जुर गरेकोमा वस्तु बिक्री सम्बन्धी करार भएको मानिनेछ ।

**<u>♣स्पष्टीकरण</u>** : <u>यस परिच्छेदको प्रयोजनको लागि “वस्तु” भन्नाले तत्काल प्रचलनमा रहेको मुद्रा, धितोपत्र वा उजुर गरी कार्यान्वयन गर्न सकिने दावी (एक्सनेवल क्लेम) बाहेक खरिद-बिक्री हुन सक्ने कुनै पनि चल सम्पत्ति सम्झनु पर्छ ।”</u>

(२) वस्तु बिक्री सम्बन्धी करार शर्त बिना वा शर्त सहितको हुन सक्नेछ ।

(३) बिक्रेताको स्वामित्व वा भोग चलनमा तत्काल कायम रहेका वस्तु वा निजले भविष्यमा उत्पादन गर्ने वा प्राप्त गर्ने वस्तु बिक्री गर्ने गरी करार गर्न सकिनेछ ।

४१. **<u>वस्तु बिक्री सम्बन्धी करार बदर हुने</u>** : कुनै खास किसिमको वस्तु बिक्री गर्ने गरी करार भएकोमा त्यस्तो करार हुँदाका बखत वा सोभन्दा अगाडि नै त्यस्तो वस्तुको हानि नोक्सानी भई सकेको रहेछ र सो कुरा बिक्रेतालाई करार गर्दाका बखत थाहा रहेनछ भने त्यस्तो करार बदर हुनेछ ।

---

♣ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा संशोधन ।

**स्पष्टीकरण** : यस दफाको प्रयोजनको लागि "खास किसिमको वस्तु" भन्नाले करार गर्दाका बखत उल्लेख गरिएको खास किसिमको वस्तु सम्झनु पर्दछ ।

४२. **वस्तुको मूल्य निर्धारण** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक वस्तुको मूल्य करारका शर्तबाट वा करारमा मञ्जुर गरिएको तरिकाबाट वा पक्षहरु बीच हुने कारोबारको सिलसिलाबाट निर्धारण गरिनेछ ।

(२) वस्तुको मूल्य नाप, तौल अनुसार निर्धारण गरिएको भए करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक त्यस्तो वस्तुको मूल्य खुद नाप तौलको आधारमा कायम हुनेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम वस्तुको मूल्य निर्धारण हुन नसकेमा सम्बद्ध परिस्थितिलाई बिचार गरी मनासिब माफिकको मूल्य क्रेताले बिक्रेतालाई भुक्तानी गर्नु पर्नेछ ।

४३. **वस्तुको मूल्य चुक्ता गर्नु पर्ने** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायको अवस्थामा देहाय बमोजिम वस्तुको मूल्य चुक्ता गर्नु पर्नेछ :-

(क) क्रेताले आफूले खरिद गरेको वस्तुको मूल्य वस्तु खरिद गर्दाका बखत बिक्रेतालाई भुक्तानी गर्नु पर्नेछ ।

(ख) वस्तुको मूल्य नगदमा भुक्तानी गर्नु पर्नेछ ।

(ग) वस्तुको मूल्य भुक्तानी गर्ने कार्य र वस्तु हस्तान्तरण गर्ने कार्य संगसंगै हुनु पर्ने गरी करार भएको मानिनेछ ।

**स्पष्टीकरण** : यस दफाको प्रयोजनका लागि "नगद" भन्नाले बैंक मार्फत् भुक्तानी हुने चेक, यात्रु चेक, प्रतिज्ञापत्र (प्रमिशरी नोट), विनिमयपत्र (बील अफ एक्स्चेन्च), प्रतीतपत्र (लेटर अफ क्रेडिट), बैंक ड्राफ्ट, क्रेडिट कार्ड, टेलिग्राफिक ट्रान्सफर समेत सम्झनु पर्छ ।

४४. **वस्तुको विवरण :** (१) बिक्री गरिने कुनै वस्तुको नाम, ब्राण्ड, ट्रेडमार्क वा स्पेसिफिकेशनको विवरण करारमा उल्लेख भएकोमा सोही नाम, ब्राण्ड, ट्रेडमार्क वा स्पेसिफिकेशन बमोजिमको वस्तु बिक्री गर्ने गरी करार भएको मानिनेछ ।

(२) बिक्री गरिने कुनै वस्तुको नाम, ब्राण्ड, ट्रेडमार्क वा स्पेसिफिकेशनको विवरण र नमूना (स्याम्पल) समेत उल्लेख भएकोमा त्यस्तो वस्तुको थोक परिमाण नमूना बमोजिम मात्र नभई नाम, ब्राण्ड, ट्रेडमार्क वा स्पेसिफिकेशनको विवरण बमोजिम नै हुनु पर्नेछ ।

४५. **बिक्री गरिने वस्तुमा हक भएको मानिने** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक बिक्री गरिएको वस्तु भए त्यस्तो वस्तुमा वा भविष्यमा बिक्री गर्न मञ्जुर गरिएको वस्तु भए

बिक्री गरिने वस्तुमा बिक्रेताको हक रहेको वा हक रहने र त्यस्तो वस्तु कसैको कब्जा, नियन्त्रण वा भोगचलनबाट मुक्त रहेको वा रहने कुरा मानिनेछ ।

(२) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक बिक्री गरिएको वा बिक्री हुने वस्तुमा बिक्रेताको बिक्री गर्ने अधिकार रहेको मानिनेछ ।

४६. **<u>वस्तु गुणस्तरयुक्त रहेको मानिने</u>** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक बिक्री भएको वा बिक्री हुने वस्तु व्यापारिक गुणस्तरयुक्त (मर्च्याण्टेबल क्वालिटी) भएको मानिनेछ ।

(२) कुनै खास प्रयोजनका लागि बिक्री भएको वा बिक्री हुने कुनै खास वस्तु सो प्रयोजनका लागि उपयुक्त भएमा त्यसरी बिक्री भएको वा हुने वस्तु व्यापारिक गुणस्तरयुक्त रहेको मानिनेछ ।

तर करारमा नै त्यस्तो वस्तुको खोट उल्लेख भएकोमा वा क्रेतालाई त्यस्तो खोट करार हुनु अगावै वा वस्तु हेर्दा नै थाहा भई सकेकोमा त्यस्ता वस्तु व्यापारिक गुणस्तरयुक्त भएको वा रहेको मानिने छैन ।

(३) कुनै खास वस्तुको गुणस्तर करारमा उल्लेख भएकोमा सोही बमोजिम र उल्लेख नभएकोमा त्यस्तो वस्तु प्रचलित स्तर (स्टाण्डर्ड) अनुसार गुणस्तरयुक्त हुनु पर्नेछ ।

(४) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक बिक्री भएको वा बिक्री हुने वस्तु खास गुणस्तरयुक्त छ भनी बिक्रेताले वारेण्टी दिएको मानिने छैन ।

४७. **<u>नमूनाबाट बिक्री हुने</u>** : (१) करारमा प्रत्यक्ष वा परोक्ष रुपमा नमूना हेरी वस्तु बिक्री गर्ने व्यवस्था रहेकोमा त्यस्तो वस्तु नमूना हेरी बिक्री हुने गरी करार भएको मानिनेछ ।

(२) नमूना हेरी वस्तु बिक्री गर्ने गरी करार भएकोमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक त्यस्तो करारमा देहायका शर्तहरु रहेको मानिनेछ :-

(क) थोक वस्तुका गुणस्तर नमूनाको गुणस्तर अनुसार भएको,

(ख) क्रेतालाई वस्तुको थोक परिमाणको गुणस्तर नमूनासंग भिडाउने मनासिब माफिकको अवसर प्राप्त भएको,

(ग) बिक्री भएको वा हुने वस्तु कुनै पनि खोटबाट मुक्त रहेको र नमूनासंग भिडाउँदाका बखत हेर्नासाथ त्यस्तो वस्तु व्यापारिक गुणस्तरयुक्त भएको ।

४८. **वस्तुको स्वामित्व हस्तान्तरण सम्बन्धी व्यवस्था** : (१) कुनै खास वा निश्चित वस्तु बिक्री गर्ने गरी करार भएकोमा त्यस्तो वस्तुको हस्तान्तरण करारमा उल्लेख भएकोमा सोही बमोजिम र करारमा उल्लेख नभएकोमा करारका शर्त, पक्षहरुको आचरण तथा सम्बद्ध परिस्थितिबाट पक्षहरुको मनसाय अभिव्यक्त भए बमोजिम हस्तान्तरण हुनेछ ।

(२) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक कुनै खास वस्तु तत्काल बुझाउन सकिने अवस्थामा करार भएकोमा करार भएपछि वा वस्तुको मूल्य तिरेपछि वस्तु हस्तान्तरण गर्ने पक्षहरुको मनसाय रहेको मानिनेछ ।

(३) कुनै खास वस्तु तत्काल बुझाउन सकिने अवस्थामा करार भएकोमा त्यस्तो वस्तुको मूल्य निर्धारण गर्न क्रेताले नाप, तौल, जाँच वा अन्य कुनै कार्य सम्पादन गर्नु पर्ने रहेछ भने त्यस्तो कार्य सम्पादन गरी मनासिब समयभित्र बिक्रेतालाई सोको जानकारी नदिएसम्म वस्तु हस्तान्तरण हुने छैन ।

(४) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक बिक्री भएको वा हुने वस्तु जुन स्थानमा रहेकोछ सोही स्थानमा वस्तु हस्तान्तरण हुने गरी करार भएको मानिनेछ ।

(५) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक क्रेतालाई वस्तु हस्तान्तरण भएकै बखत त्यस्तो वस्तुमा क्रेताको हक वा स्वामित्व कायम भएको मानिनेछ ।

४९. **जोखिम व्यहोर्नु पर्ने** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक क्रेतालाई वस्तु हस्तान्तरण नभएसम्म त्यस्तो वस्तुको हानि नोक्सानीको जोखिम बिक्रेताले व्यहोर्नु पर्नेछ ।

(२) बिक्रेता वा क्रेताको कारणले वस्तु हस्तान्तरण हुन ढिलाई भएकोमा जसको कारणले ढिला भएको हो सोही व्यक्तिले वस्तुमा उपदफा (१) बमोजिमको हानि नोक्सानीको जोखिम व्यहोर्नु पर्नेछ ।

(३) खरिद भएको स्थानबाट क्रेताले तोकेको स्थानसम्म वस्तु पुऱ्याउन मञ्जुर गरेकोमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक त्यस्तो वस्तुको हानि नोक्सानीको जोखिम बिक्रेताले व्यहोर्नु पर्नेछ ।

५०. **वस्तु निरीक्षण गर्ने क्रेताको अधिकार** : बिक्री भएको वस्तु क्रेताकहाँ पुऱ्याइएकोमा क्रेताले त्यस्तो वस्तु करार बमोजिम भए नभएको जाँची यकीन गर्न मनासिब माफिकको अवसर पाउनेछ र निजले त्यसरी यकीन नगरेसम्म निजले वस्तु बुझिलिएको मानिने छैन ।

५१. **वस्तु बुझिलिएको मानिने** : देहायको कुनै अवस्थामा क्रेताले वस्तु बुझिलिएको मानिनेछ :-

(क) क्रेता वा निजको प्रतिनिधिले वस्तु बुझिलिएमा,

(ख) वस्तु बुझिलिएको रसिद, भरपाई गरिदिएमा,

(ग) दफा ५० बमोजिम वस्तु निरीक्षण गरी करार बमोजिम भएको ठहर गरी क्रेताले भण्डारन गरेमा,

(घ) कुनै वस्तु क्रेताकहाँ पुगेकोमा मनासिब माफिकको समयभित्र निजले त्यस्तो वस्तु बुझिलिन इन्कार गरेको जानकारी बिक्रेतालाई नपठाई निजकहाँ त्यस्तो वस्तु रहेमा,

(ङ) त्यस्तो वस्तुमा निजको स्वामित्व रहेको पुष्टि गर्ने कुनै काम निजबाट भएमा।

५२. **<u>वस्तु हस्तान्तरण गर्नु पर्ने समय</u>** : (१) करारमा कुनै वस्तु कुनै खास समयमा वा कुनै खास अवधिभित्र हस्तान्तरण गरिसक्नु पर्नेछ भनी उल्लेख भएकोमा बिक्रेताले क्रेतालाई सो वस्तु सोही समय वा अवधिभित्रमा हस्तान्तरण गरिसक्नु पर्नेछ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि बिक्रेताले करारमा तोकिएको समय वा अवधिभन्दा अगावै वा सो समय वा अवधि नाघिसकेपछि हस्तान्तरण गरेको वस्तु क्रेताले बुझिलिएमा बिक्रेताले वस्तु हस्तान्तरण गरेको मानिनेछ।

५३. **<u>बिक्री गरिएको वस्तु सम्बन्धी कागजात बुझाउनु पर्ने</u>** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक कुनै वस्तु बिक्री गर्दा त्यस वस्तुको स्वामित्वसंग सम्बन्धित वा सो वस्तुको उपयोगमा आधारभूत रुपमा आवश्यक पर्ने कागजात समेत नबुझाई स्वामित्व हस्तान्तरण भएको मानिने छैन।

५४. करार गरिएको भन्दा फरक परिमाणमा वस्तु बुझाउन ल्याएमा : (१) बिक्रेताले करारमा उल्लेख गरिएको भन्दा कम परिमाणमा वस्तु बुझाउन ल्याएमा क्रेताले त्यस्तो वस्तु बुझिलिन इन्कार गर्न सक्नेछ।

तर क्रेताले त्यस्तो परिमाणमा पनि वस्तु बुझिलिएमा करारमा उल्लिखित दरमा सो परिमाणको मूल्य चुक्ता गर्नु पर्नेछ।

(२) बिक्रेताले करारमा उल्लेख गरिएको भन्दा बढी परिमाणमा वस्तु बुझाउन ल्याएमा क्रेताले करारमा उल्लेख भएको परिमाणको वस्तु बुझिलिई बाँकी वस्तु वा पूरै परिमाणका वस्तु बुझिलिन इन्कार गर्न सक्नेछ।

तर क्रेताले यसरी बुझाउन ल्याएको पूरै वस्तु बुझिलिएमा करारमा उल्लिखित दरमा पूरै परिमाणको मूल्य चुक्ता गर्नु पर्नेछ।

(३) बिक्रेताले करारमा उल्लिखित वस्तुको विवरणभन्दा फरक वस्तु मिसाई वस्तु बुझाउन ल्याएमा क्रेताले करारमा उल्लेख भएको वस्तु बुझिलिई बाँकी वस्तु वा पूरै वस्तु बुझिलिन इन्कार गर्न सक्नेछ।

(४) करारमा अन्यथा व्यवस्था गरिएकोमा बाहेक पटक पटक गरी वस्तु बुझिलिन क्रेता बाध्य हुने छैन।

(५) बिक्रेताले बुझाउन ल्याएको वस्तु क्रेताले बुझिलिन इन्कार गरेमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक इन्कार गरिएको वस्तु फिर्ता गर्न निज बाध्य हुने छैन ।

तर निजले वस्तु बुझिलिन इन्कार गरेको कारण सहितको सूचना छिटो साधनद्वारा बिक्रेतालाई दिनु पर्नेछ ।

५५. **<u>क्षतिपूर्ति सम्बन्धी विशेष व्यवस्था</u>** : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि यस परिच्छेद अन्तर्गतका करारको क्षतिपूर्तिको सम्बन्धमा देहाय बमोजिम हुनेछ :-

(क) वस्तु बिक्री सम्बन्धी करार भइसकेपछि क्रेताले वस्तु स्वीकार नगरेमा वा स्वीकार गर्न इन्कार गरेमा वा वस्तुको मूल्य तिर्न इन्कार गरेमा करारको अधीनमा रही बिक्रेताले क्रेता विरुद्ध यसरी वस्तु स्वीकार नगरेको वा स्वीकार गर्न इन्कार गरे बापतको क्षतिपूर्ति दावी गर्न सक्नेछ ।

(ख) खण्ड (क) बमोजिमको क्षतिपूर्तिको निर्धारण गर्दा क्रेताले स्वीकार नगरेको वा स्वीकार गर्न इन्कार गरेको वस्तु बजारमा उपलब्ध भएमा त्यस्तो वस्तुको करारमा उल्लेख भए बमोजिमको मूल्य र बजार वा प्रचलित मूल्य बीच भएको अन्तरको आधारमा निर्धारण हुनेछ ।

(ग) वस्तु बिक्री सम्बन्धी करार भइसकेपछि बिक्रेताले करार बमोजिम क्रेतालाई वस्तु नबुझाएमा वा बुझाउन इन्कार गरेमा वस्तु नबुझाए बापत क्रेताले बिक्रेता विरुद्ध क्षतिपूर्ति दावी गर्न सक्नेछ ।

(घ) खण्ड (ग) बमोजिमको क्षतिपूर्तिको निर्धारण गर्दा बिक्रेताले क्रेतालाई नबुझाएको वा बुझाउन इन्कार गरेको वस्तु बजारमा उपलब्ध भएमा त्यस्तो वस्तुको करारमा उल्लेख भए बमोजिमको मूल्य र बजार वा प्रचलित मूल्य बीच भएको अन्तरको आधारमा हुनेछ ।

## परिच्छेद-८

## एजेन्सी सम्बन्धी करार

५६. **<u>एजेन्सी सम्बन्धी करार :</u>** कुनै व्यक्तिले आफ्नो व्यक्तिगत दक्षतासित सम्बन्धित विषयमा बाहेक आफ्नो तर्फबाट कुनै काम गर्न वा प्रतिनिधि (एजेण्ट) भई व्यवसाय सञ्चालन गर्न वा तेस्रो व्यक्तिसंग कुनै कारोबार गर्न वा त्यस्तो व्यक्ति समक्ष आफ्नो प्रतिनिधित्व गर्न वा प्रतिनिधि

नियुक्त गर्ने व्यक्ति (मुख्य व्यक्ति) र तेस्रो व्यक्ति बीच कुनै किसिमको कानूनी सम्बन्ध स्थापित गर्न कसैलाई प्रतिनिधि नियुक्त गर्न सक्नेछ र यसरी प्रतिनिधि नियुक्त भएकोमा एजेन्सी सम्बन्धी करार भएको मानिनेछ ।

५७. **प्रतिनिधिबाट भए गरेको कारोबारको मान्यता** : (१) दफा ५६ बमोजिम नियुक्त प्रतिनिधि मार्फत् भए गरेको करार वा प्रतिनिधिबाट भए गरेको काम कारबाहीबाट उत्पन्न दायित्व मुख्य व्यक्तिले गरेको करार वा कार्य सरह मानी कार्यान्वयन हुनेछ ।

तर प्रतिनिधिले आफूलाई प्राप्त अधिकार नाघी गरेको कामका सम्बन्धमा मुख्य व्यक्ति जिम्मेवार हुने छैन ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि अधिकार उल्लंघन गरी भए गरेको काम कारबाहीमध्ये कुनै काम कारबाही अधिकार क्षेत्रभित्र र कुनै काम कारबाही अधिकार क्षेत्रबाहिरको भएमा अधिकार क्षेत्रभित्रको भाग छुट्याउन सकिने रहेछ भने त्यसरी अधिकार क्षेत्रभित्र पर्ने हदसम्मको काम कारबाहीप्रति मुख्य व्यक्ति जिम्मेवार हुनेछ ।

(३) मुख्य व्यक्तिसंग प्रतिनिधि मार्फत् भएको कारोबारको सिलसिलामा निजलाई दिएको सूचना मुख्य व्यक्तिलाई दिए सरह मानिनेछ ।

५८. **उप-प्रतिनिधि नियुक्त गर्न सकिने** : (१) कुनै व्यापार, व्यवसाय वा करोबारको प्रकृति अनुसार उप-प्रतिनिधि नियुक्त गर्नु पर्ने वा एजेन्सी सम्बन्धी करारको व्यवस्था वा प्रचलन अनुसार उप-प्रतिनिधि नियुक्त गर्न सकिने भएमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक प्रतिनिधिले मुख्य व्यक्तिको स्वीकृति लिई उप-प्रतिनिधि नियुक्त गर्न सक्नेछ ।

तर प्रतिनिधिले नै व्यक्तिगत रुपमा प्रतिनिधित्व गर्ने वा कार्य सम्पादन गर्ने गरी नियुक्त भएको प्रतिनिधिले उप-प्रतिनिधि नियुक्त गर्न सक्ने छैन ।

(२) उपदफा (१) बमोजिम उप-प्रतिनिधि नियुक्त भएकोमा सो कुरा मुख्य व्यक्तिलाई जानकारी गराउनु पर्नेछ र यसरी नियुक्त उप-प्रतिनिधिको हक तथा दायित्व मुख्य व्यक्तिले नियुक्त गरेको प्रतिनिधिलाई भए सरह हुनेछ ।

(३) मुख्य व्यक्तिको स्वीकृति बिना प्रतिनिधिले कुनै उप-प्रतिनिधि नियुक्त गरेमा त्यस्तो उप-प्रतिनिधिबाट भए गरेको काम कारबाहीका लागि मुख्य व्यक्ति जिम्मेवार हुने छैन । त्यसरी नियुक्त भएको उप-प्रतिनिधि व्यक्तिगत रुपमा जवाफदेही हुनेछ ।

५९. **प्रतिनिधिले पालन गर्नु पर्ने कुराहरु :** (१)करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक प्रतिनिधिले देहायका कुराहरु पालना गर्नु पर्नेछ :-

(क) एजेन्सी सम्बन्धी करारको शर्त तथा मुख्य व्यक्तिले दिएको निर्देशनको अधीनमा रही काम गर्नु पर्नेछ ।

(ख) करारमा कुनै शर्त उल्लेख नभएकोमा वा मुख्य व्यक्तिले कुनै निर्देशन नदिएकोमा प्रतिनिधिले सुम्पिएको काम तथा व्यापार व्यवसायको प्रकृति र कारोबार गर्ने स्थानको कानून तथा प्रचलन अनुसार सो काम जसरी सम्पादन गर्नु पर्ने हो सोही बमोजिम असल नियतले पूर्ण लगनशीलताका साथ आवश्यक सीप तथा दक्षता बमोजिम सम्पादन गर्नु पर्नेछ ।

तर कुनै विषयमा प्रतिनिधिमा दक्षता वा क्षमता नरहेको कुरा मुख्य व्यक्तिलाई पहिला नै थाहा रहेछ भने त्यस्तो प्रतिनिधिको अदक्षता वा असक्षमताबाट हुन गएको हानि नोक्सानी बापत प्रतिनिधि उत्तरदायी हुने छैन ।

(ग) प्रतिनिधिबाट हटाइएपछि निजले सोही विषयमा पूर्ववत् रुपमा प्रतिनिधिको हैसियतले कुनै काम गर्नु हुँदैन ।

(घ) मुख्य व्यक्तिले मागेको बखत आफ्नो एजेन्सीको व्यवसाय सम्बन्धी हिसाब किताबको विवरण दिनु वा देखाउनु पर्नेछ ।

(ङ) एजेन्सीको कामको सिलसिलामा कुनै बाधा अवरोध वा कठिनाई परेमा यथासम्भव छिटो मुख्य व्यक्तिलाई खबर गरी आवश्यक निर्देशन लिनु पर्नेछ र यसरी दिएको निर्देशन बमोजिम भए गरेको कार्य बापत मुख्य व्यक्ति जिम्मेवार हुनेछ ।

(२) खण्ड (क), (ख) र (ग) बमोजिम गर्नु पर्ने कर्तब्य पूरा नगरेको कारणबाट मुख्य व्यक्तिलाई कुनै हानि नोक्सानी भएमा त्यस्तो हानि नोक्सानी प्रतिनिधिले व्यक्तिगत रुपमा व्यहोर्नु पर्नेछ ।

६०. **प्रतिनिधि उत्तरदायी हुने :** (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायको अवस्थामा मुख्य व्यक्तिको तर्फबाट प्रतिनिधिले गरेको कारोबारको लागि निज व्यक्तिगत रुपमा उत्तरदायी हुनेछ :-

(क) व्यक्तिगत रुपमा उत्तरदायी हुने गरी तेस्रो पक्षसंग कुनै कारोबारका सम्बन्धमा करार गरेमा,

(ख) बेनामी मुख्य व्यक्तिका लागि वा त्यस्ता व्यक्तिका तर्फबाट काम गरेकोमा त्यस्तो मुख्य व्यक्ति प्रकाश नगरिएमा,

(ग) कुनै कारणले मुख्य व्यक्ति विरुद्ध मुद्दा मामिला गर्न नसकिने भएमा,

(घ) आफ्नै नामबाट करार गरेको भएमा,

(ङ) प्रतिनिधि नियुक्त गरेको करार वा अख्तियारी बाहिर गई काम गरेको भएमा,

(च) कारोबार गर्ने सिलसिलामा झुक्यान वा जालसाजी गरेको भएमा,

(छ) व्यापारको प्रकृति बमोजिम प्रतिनिधि व्यक्तिगत रुपमा उत्तरदायी हुनु पर्ने भएमा,

(ज) कारोबारमा प्रतिनिधि समेतको हित संलग्न रहेको भएमा ।

(२) प्रतिनिधि र तेस्रो व्यक्ति बीच भएको करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक उपदफा (१) बमोजिम प्रतिनिधि व्यक्तिगत रुपमा उत्तरदायी भएको कारणले मात्र तेस्रो व्यक्तिले मुख्य व्यक्ति विरुद्ध कुनै दावी गर्न बाधा पुऱ्याएको मानिने छैन र प्रतिनिधिबाट असूल हुन नसकेको रकम बापत मुख्य व्यक्ति विरुद्ध पनि कानूनी कारबाही चलाउन सकिनेछ ।

(३) उपदफा (२) बमोजिम मुख्य व्यक्ति विरुद्ध कानूनी कारबाही चलाउनका लागि प्रतिनिधिबाट अन्तिम भरिभराउ भएको मितिबाट हदम्याद शुरु भएको मानिनेछ ।

६१. **प्रतिनिधित्वको समाप्ती** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक देहायको अवस्थामा प्रतिनिधि स्वतः कायम नरहेको मानिनेछ :-

(क) प्रतिनिधिले स्वेच्छाले प्रतिनिधि नरहने निर्णय गरेमा,

(ख) मुख्य व्यक्तिले प्रतिनिधिलाई दिएको अख्तियारी वा करार रद्द गरेमा वा करार पालना गर्न असम्भव भएको सूचना प्रतिनिधिलाई दिएमा,

(ग) कुनै खास कामको लागि प्रतिनिधि नियुक्त गरेकोमा सो काम पूरा भएमा,

(घ) खास अवधिको लागि प्रतिनिधि नियुक्त गरेकोमा सो अवधि समाप्त भएमा,

(ङ) मुख्य व्यक्ति वा प्रतिनिधिको मृत्यु भएमा वा होस ठेगानमा नरहेमा,

(च) मुख्य व्यक्ति साहूको दामासाहीमा परेमा,

(छ) जुन विषयको बारेमा प्रतिनिधि नियुक्त गरेको हो सो विषयको अस्तित्व नै समाप्त भएमा,

(ज) कम्पनीले प्रतिनिधि नियुक्त गरेकोमा वा कम्पनीको प्रतिनिधि भएकोमा त्यस्तो कम्पनी खारेज भएमा ।

(२) मुख्य व्यक्तिले प्रतिनिधिलाई दिएको अधिकार निजले प्रयोग गर्नु अघि त्यस्तो सम्पूर्ण वा केही अधिकार जहिलेसुकै रद्द गर्न सक्नेछ ।

तर प्रतिनिधिले केही अधिकार प्रयोग गरी सकेको रहेछ भने त्यस्तो अधिकार अनुसार भै सकेको कामका लागि अधिकार रद्द भए गरेको मानिने छैन ।

(३) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि एजेन्सी खडा गर्ने मुख्य विषयसंग सम्बन्धित सम्पत्तिमा प्रतिनिधिको पनि हिस्सा भएमा त्यस्तो हिस्सामा प्रतिकूल असर पर्ने गरी प्रतिनिधिलाई बर्खास्त गर्न सकिने छैन ।

६२. **प्रतिनिधिलाई हटाउन नहुने** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक कुनै निश्चित समय वा कामको लागि प्रतिनिधि नियुक्त गरिएकोमा उचित र पर्याप्त कारण नभई मुख्य व्यक्तिले सो समयभन्दा पहिले वा काम सम्पन्न नभई प्रतिनिधिलाई हटाउन हुँदैन ।

(२) निश्चित समय वा काम नतोकी नियुक्त गरिएको प्रतिनिधिलाई उचित कारण सहितको पूर्व सूचना नदिई हटाउनु हुँदैन ।

(३) उपदफा (१) वा (२) विपरीत हुने गरी मुख्य व्यक्तिले कुनै प्रतिनिधिलाई हटाएमा त्यस्तो प्रतिनिधिलाई निजले मनासिब माफिकको क्षतिपूर्ति दिनु पर्नेछ ।

६३. **प्रतिनिधिले एजेन्सी छोड्न नहुने** : (१) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक कुनै निश्चित समय वा कामका लागि नियुक्त भएको प्रतिनिधिले निर्धारित समय वा काम समाप्त नभएसम्म उचित र पर्याप्त कारण नभई प्रतिनिधिको रुपमा काम गर्न छोड्न हुँदैन ।

(२) उपदफा (१) बमोजिम निश्चित समय वा काम नतोकिएकोमा प्रतिनिधि भई काम गर्न छाड्न लागेको कारण सहितको पूर्व सूचना मुख्य व्यक्तिलाई नदिई सो काम गर्न छोड्न हुँदैन ।

(३) उपदफा (१) वा (२) विपरीत हुने गरी कुनै प्रतिनिधिले सो हैसियतमा काम गर्न छोडेमा मुख्य व्यक्तिले मनासिब माफिकको क्षतिपूर्ति दावी गर्न सक्नेछ ।

६४. **प्रतिनिधि हटेमा उप-प्रतिनिधि पनि हट्ने** : यस ऐन बमोजिम प्रतिनिधि कायम नरहेकोमा निजबाट नियुक्त उप-प्रतिनिधि पनि स्वतः हटेको मानिनेछ ।

## परिच्छेद-९

## मालसामान ढुवानी सम्बन्धी करार

६५. **ढुवानी सम्बन्धी करार** : (१) एक ठाउँबाट अर्को ठाउँमा कुनै मालसामान ढुवानी गर्ने सम्बन्धमा करार भएकोमा ढुवानी सम्बन्धी करार भएको मानिनेछ ।

(२) करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक मालसामान ढुवानी गर्न माल सामानको धनीले ढुवानीकर्तालाई मालसामान बुझाएका बखत दिइने रसिद ढुवानीकर्ता र माल सामानको धनी बीच करार भएको प्रमाण मानिनेछ ।

स्पष्टीकरण : यस परिच्छेदको प्रयोजनको लागि "ढुवानीकर्ता" भन्नाले हवाई यातायात वा सामुद्रिक यातायात बाहेकका यातायात सञ्चालन गर्ने वा त्यस्तो कार्यको व्यवसाय गर्ने व्यक्ति सम्झनु पर्छ र सो शब्दले आन्तरिक जल यातायात वा रज्जुमार्ग (रोपवे) वा जनावर मार्फत् वा अन्य कुनै किसिमले ढुवानी व्यवसाय सञ्चालन गर्ने व्यक्तिलाई समेत जनाउनेछ ।

तर माल सामानको धनीले ज्यालामा काम लगाएको व्यक्ति वा निजको प्रतिनिधि वा निजको मातहतमा काम गर्ने व्यक्तिले माल सामान ढुवानी गरेकोमा यस परिच्छेदको प्रयोजनको लागि ढुवानीकर्ता मानिने छैन ।

६६. **ढुवानीकर्ताको दायित्व** : (१) ढुवानीको लागि माल सामानको धनीसंग बुझिलिएको माल सामान सही अवस्थामा ढुवानी गरी पुऱ्याउनु पर्ने स्थानमा पुऱ्याउने दायित्व ढुवानीकर्ताको हुनेछ ।

(२) ढुवानीको लागि माल सामानको धनीसंग बुझिलिएको माल सामान हराएमा, नासिएमा, टुटे फुटेमा, बिग्रीएमा वा हानि नोक्सानी भएमा वा अन्य कुनै किसिमबाट सही अवस्थामा पुऱ्याउनु पर्ने स्थानमा नपुगेमा ढुवानीकर्ता जवाफदेही हुनेछ ।

(३) ढुवानीकर्ताले करारमा उल्लेख भएको समयभित्र र करारमा ढुवानी गरिसक्नु पर्ने समय उल्लेख नभएकोमा मनासिब माफिकको समयभित्र माल सामान ढुवानी गरी माल सामानको धनी वा निजको प्रतिनिधि वा निजले तोकेको व्यक्तिलाई बुझाउनु पर्नेछ ।

६७. **एकभन्दा बढी ढुवानी साधनबाट ढुवानी भएमा पहिलो ढुवानीकर्ता जवाफदेही हुने** : कुनै माल सामान एकभन्दा बढी ढुवानीकर्ताले वा एकभन्दा बढी ढुवानी साधनबाट ढुवानी गर्नु परेमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक जुन ढुवानीकर्तालाई माल सामानको धनीले माल सामान बुझाएको हो सोही ढुवानीकर्ता यस परिच्छेदको प्रयोजनको लागि जिम्मेवार हुनेछ ।

६८. **ढुवानीकर्ताको दायित्व सीमित हुने** : (१) करार गर्दाकै बखत माल सामानको धनी वा निजको प्रतिनिधिले ढुवानी गर्नु पर्ने मालसामानको मूल्य बढी भएको स्पष्ट रुपमा घोषणा गरेकोमा वा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक ढुवानीकर्ताले ढुवानी गरेको मालसामानको हानि वा नोक्सानी बापतको क्षतिपूर्ति दश हजार रुपैयाँभन्दा बढी हुने छैन ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि करार गर्दाकै बखत वा ढुवानीकर्तालाई ढुवानी बापत माल सामान बुझाएका बखत माल सामानको धनी वा निजको प्रतिनिधिले स्पष्ट रुपमा घोषणा गरेकोमा बाहेक सुन, चाँदी, हीरा, जवाहरात वा त्यस्ता धनमालबाट बनेका माल सामान, बहुमूल्य पत्थर, विनिमय अधिकारपत्र, धितोपत्र, अड्डाबाट पारित लिखत तथा शैक्षिक एवं अन्य निकायहरुबाट जारी भएका प्रमाणपत्र, मुद्रा, बैंक नोट, हुलाक टिकट, माछा, मासु, ताजा फलफूल तथा तरकारी, किटनाशक तथा विषादी पदार्थ, प्रज्वलनशील पदार्थ, पेट्रोलियम पदार्थ, बहुमूल्य चित्रकला, मूर्ति, क्यूरियोका मालसामान, सिसा वा सिसाबाट बनेका वा सजिलैसंग टुट्ने फुट्ने वा बिग्रने वस्तु, वन्यजन्तु तथा घरपालुवा पशुपंक्षी, हस्तकलाका सामग्री, हातहतियार, खरखनाजा तथा विष्फोटक पदार्थ, रेडियो, टेलिभिजन, कम्प्युटर जस्ता मालसामान तथा त्यस्ता मालसामानका पार्टपूर्जा, मेशीनरी मालसामान तथा ढुवानी हुनु अगावै माल सामानको धनीले घोषणा गर्नु पर्ने मालसामान भनी प्रचलित कानूनमा तोकिएका मालसामानहरुको हानि नोक्सानी बापत ढुवानीकर्ता जवाफदेही हुने छैन ।

(३) उपदफा (२) बमोजिमका मालसामानको ढुवानी बापत व्यहोर्नु पर्ने जोखिमका लागि मालसामानको धनी वा निजको प्रतिनिधि मार्फत् जोखिम विरुद्ध बिमा गराउन वा छुट्टै शुल्क लिई आफैंले बिमा गराउन वा ढुवानीकर्ताले जोखिम रोक्न अन्य आवश्यक व्यवस्था गर्न सक्नेछ ।

६९. **ढुवानीकर्ता जवाफदेही हुने** : यस परिच्छेद बमोजिम करार गर्दाका बखत वा ढुवानी बापत ढुवानीकर्तालाई मालसामान बुझाएका बखत घोषणा गरिएका वा घोषणा गर्नु नपर्ने मालसामानको ढुवानी गर्दा भएको हानि नोक्सानी वा क्षति बापत ढुवानीकर्ताले करारमा उल्लेख भएकोमा सोहीबमोजिम र उल्लेख नभएकोमा माल सामानको धनीको मञ्जुरीले ढुवानी भएका मालसामानको सोधभर्ना वा त्यस्तो मञ्जुरी नभए वा हुन नसकेमा त्यस्ता मालसामानको प्रचलित मूल्य र मूल्य कायम गर्न नसकिएमा मनासिब माफिकको मूल्य तथा परिच्छेद-१२ को अधीनमा रही माल सामानको धनीलाई हुन गएको हानि नोक्सानी बापत मनासिब माफिकको क्षतिपूर्ति समेत व्यहोर्नु पर्नेछ ।

७०. **ढुवानीकर्ताको दायित्व अन्त्य हुने** : करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक ढुवानीकर्ताको दायित्व देहायका अवस्थामा अन्त्य भएको मानिनेछ :-

(क) ढुवानीकर्ता वा निजको प्रतिनिधिले मालसामान ढुवानी गरी माल सामानको धनी वा निजको प्रतिनिधि वा निजले तोकेको व्यक्तिलाई बुझाएमा,

(ख) ढुवानीकर्तालाई बुझाएको मालसामान माल सामानको धनी वा निजको प्रतिनिधिले फिर्ता बुझिलिएमा,

(ग) दफा ७९ को उपदफा (२) को खण्ड (ख) को परिस्थिति परी निर्धारित समयभित्र मालसामान ढुवानी हुन नसक्ने कारण देखाई ढुवानीकर्ता वा निजको प्रतिनिधिले माल सामानको धनी वा निजको प्रतिनिधिलाई मालसामान फिर्ता बुझाएमा ।

## परिच्छेद-१०

## करार पूरा गर्ने समय, तरिका र स्थान

७१. **करार पूरा गर्नु पर्ने समय र तरिका** : (१) करारमा करार पूरा गर्ने समय र तरिका उल्लेख भएकोमा उल्लिखित समयभित्र र उल्लिखित तरिका बमोजिम करार पूरा गर्नु पर्नेछ ।

(२) करार बमोजिमको काम गर्न करारमा कुनै समय वा तरिका तोकिएको रहेनछ तर सो काम कुनै खास समयमा वा कुनै खास तरिकाले मात्र गर्न सकिने रहेछ भने सोही समयमा सोही तरिका बमोजिम गर्ने गरी करार भएको मानिनेछ ।

(३) उपदफा (२) मा लेखिएको अवस्थामा बाहेक करारमा करार पूरा गर्ने समय र तरिका उल्लेख नभएमा मनासिब समयभित्र मनासिब तरिका अपनाई करार पूरा गर्नु पर्नेछ ।

७२. **करार पूरा गर्ने स्थान** : (१) करारमा करार बमोजिम काम पूरा गर्न कुनै निश्चित स्थान तोकिएको रहेछ भने सो काम सोही स्थानमा पूरा गर्नु पर्नेछ ।

(२) करार बमोजिम कुनै एक पक्षले अर्को पक्षलाई कुनै मालसामान दिनु बुझाउनु पर्ने रहेछ र त्यसरी सामान दिने बुझाउने स्थान करारमा तोकिएको रहेनछ भने सो मालसामान रहेको स्थानमा नै दिने बुझाउने गरी करार भएको मानिनेछ ।

(३) करार बमोजिम काम गर्ने निश्चित स्थान करारमा तोकिएको रहेनछ तर सो काम कुनै खास स्थानमा मात्र गर्न सकिने वा चलन व्यवहार वा सो कामको प्रकृति अनुसार कुनै खास स्थानमा मात्र गर्नु पर्ने किसिमको रहेछ भने सो काम सोही स्थानमा गर्ने गरी करार भएको मानिनेछ ।

(४) उपदफा (२) र (३) मा लेखिएदेखि बाहेक अन्य अवस्थामा करार बमोजिम काम गर्ने स्थान करारमा उल्लेख भएको रहेनछ भने करार बमोजिम काम गर्ने पक्षले अर्को पक्षलाई मनासिब माफिकको स्थान तोकिदिन सूचना गर्नु पर्नेछ र अर्को पक्षले पनि सो काम गर्न मनासिब माफिकको स्थान तोकिदिनु पर्नेछ ।

७३. **करार पूरा गर्नु नपर्ने अवस्था** : देहायको अवस्थामा करार बमोजिमको काम गर्न आवश्यक पर्ने छैन :-

(क) करारको एक पक्षले अर्को पक्षलाई करार बमोजिमको दायित्व पूरा गर्नु नपर्ने गरी छुट दिएमा,

(ख) बदर गराउन सकिने करार बदर गराउन पाउने पक्षले बदर गराएमा,

(ग) अर्को पक्षले करार उल्लंघन गरेको कारणबाट करारको परिपालना हुन नसक्ने भएमा,

(घ) यस ऐनको कुनै व्यवस्था बमोजिम करार बमोजिमको काम गर्नु नपर्ने भएमा,

(ङ) दफा ७९ बमोजिम करारको परिपालना गर्नु नपर्ने भएमा ।

## परिच्छेद-११

## करारको परिपालना तथा करारबाट उत्पन्न दायित्व

७४. **करार बमोजिमको दायित्व पूरा गर्नु पर्ने** : करार गर्ने प्रत्येक पक्षले करार बमोजिमको दायित्व पूरा गर्नु पर्नेछ ।

७५. **करारको पारस्परिक परिपालना** : (१) करारका पक्षहरुले संगसंगै दायित्व पूरा गर्नु पर्ने गरी करार भएकोमा एक पक्षले आधारभूत रुपमा आफ्नो दायित्व पूरा नगर्ने किसिमको व्यवहार वा मनसाय देखाएमा अर्को पक्षले आफ्नो कबुल पूरा गर्न आवश्यक पर्ने छैन ।

(२) करारमा नै कुनै कबुल पूरा गर्ने सम्बन्धमा प्राथमिकताको क्रम तोकिएकोमा सोही बमोजिम र त्यस्तो क्रम नतोकिएकोमा करारको प्रकृति अनुसार जसले पहिले परिपालना गर्नु पर्ने हो उसैले पहिले परिपालना गर्नु पर्नेछ ।

(३) पारस्परिक कबुलहरु भएको कुनै करारमा एउटा कबुल पूरा नगरी अर्को कबुल पूरा गर्न नसकिने रहेछ भने कुनै एक पक्षले आफ्नो कबुल पूरा नगरेको कारणले अर्को पक्षबाट करार पालना हुन नसकी भएको हानि नोक्सानी त्यस्तो पक्षले भराई लिन सक्नेछ ।

(४) उपदफा (१) बमोजिमको करार भएकोमा कुनै पक्षले अर्को पक्षलाई त्यस्तो करारको परिपालना गर्न नसक्ने गरी रोक लगाएमा करारको परिपालना गर्न असमर्थ हुने पक्षले सो करारलाई बदर गराउन र त्यसरी करार बदर भएको कारणबाट कुनै हानि नोक्सानी परेको भए सो समेत भराई लिन पाउनेछ ।

७६. **करारको हक र दायित्व सर्ने** : करार गर्ने कुनै व्यक्तिको मृत्यु भएमा वा निजको होस ठेगानमा नरहेमा सो करार बमोजिम प्राप्त हुने हक त्यस्तो करार गर्ने व्यक्तिको सम्पत्ति प्राप्त गर्ने

हकवालामा सर्नेछ र निजले प्राप्त गरेको सम्पत्तिले खामेको हदसम्मको दायित्व पनि निजले नै व्यहोर्नु पर्नेछ ।

तर व्यक्तिगत दक्षता वा योग्यताको आधारमा प्राप्त गरेको हक र दायित्व भने त्यस्तो हकवालामा सर्ने छैन ।

७७. **करार परिपालना गर्ने व्यक्ति** : (१) करारको परिपालना करार गर्ने व्यक्तिबाटै हुनु पर्नेमा बाहेक निजको प्रतिनिधि वा निजले नियुक्त गरेको कुनै व्यक्ति वा निजको तर्फबाट अन्य कसैबाट पनि परिपालना गराउन सकिनेछ ।

तर अर्को पक्षको मञ्जुरी बिना करारको कुनै पक्षले करार अन्तर्गतका दायित्व अन्य कसैलाई हस्तान्तरण गर्न पाउने छैन ।

(२) कुनै पक्षले तेस्रो व्यक्तिबाट भए गरेको कामलाई स्वीकार गरी सकेपछि करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक करार गर्ने पक्षबाटै सो काम हुनु पर्ने भनी पछि दावी गर्न पाउने छैन ।

(३) दुई वा दुईभन्दा बढी व्यक्तिहरु मिली संयुक्त रुपले कुनै अर्को पक्षसंग करार गरेकोमा करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक संयुक्त रुपले करार गर्ने व्यक्तिहरुमध्ये कुनै वा सबैबाट सो करार बमोजिमको दायित्व पूरा गर्नु गराउनु पर्नेछ ।

(४) उपदफा (३) बमोजिम कुनै व्यक्तिले दायित्व पूरा गरेकोमा त्यसरी दायित्व पूरा गर्ने व्यक्तिहरुले संयुक्त रुपले करार गर्ने अरु व्यक्तिहरुसंग दामासाहीले हर्जाना वा नोक्सानी भराउन सक्ने छन् ।

(५) उपदफा (३) बमोजिम भएको करारमा कुनै एक पक्षले अर्को पक्षमध्येको कुनै व्यक्तिलाई निजको हिस्सामा पर्ने दायित्वबाट छुट दिएमा अन्य व्यक्तिहरु सो करारको बाँकी दायित्वबाट मुक्त हुने छैनन् ।

७८. **करारको परिपालना गराउने अधिकार पक्षलाई मात्र हुने** : (१) करारमा पक्ष रहेको व्यक्तिले मात्र अर्को पक्षसंग सो करारको परिपालनाको माग गर्न सक्नेछ ।

तर कुनै व्यक्तिको हितको निमित्त करार गरिएको भएमा त्यस्तो व्यक्तिले करारको पक्ष नभए पनि परिपालनाको माग गर्न सक्नेछ।

(२) कुनै काम गर्ने वा नगर्ने गरी दुई वा दुईभन्दा बढी व्यक्तिहरुले संयुक्त रुपमा कबुल गरिएको रहेछ भने करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक त्यसरी करार गर्ने सबै व्यक्तिहरुले संयुक्त रुपमा करारको परिपालना गराई पाउन माग गर्न सक्ने छन् ।

७९. **परिस्थितिमा आधारभूत परिवर्तन भएमा करार परिपालना गर्नु नपर्ने** : (१) करार गर्दाको परिस्थितिमा आधारभूत परिवर्तन भै करारको परिपालना गर्न असम्भव भएमा करार बमोजिमको काम गर्नु पर्ने छैन ।

(२) उपदफा (१) को सर्वसामान्यतामा प्रतिकूल प्रभाव नपर्ने गरी देहायको कुनै अवस्था भएमा करार गर्दाको परिस्थितिमा आधारभूत परिवर्तन भएको मानिनेछ :-

(क) करार अवैध भै पालना गर्न नहुने भएमा,

(ख) युद्ध, बाढी, पैरो, आगलागी, भूकम्प, ज्वालामुखी जस्ता मानवीय नियन्त्रणभन्दा बाहिरका परिस्थिति उपन्न भई करारको परिपालना हुन सम्भव नहुने भएमा,

(ग) करारको परिपालना हुनको लागि जुन वस्तु आवश्यक थियो सो वस्तु नष्ट वा विनाश भएमा, सोको अस्तित्व नरहेमा वा त्यस्तो वस्तु प्राप्त हुन नसक्ने भएमा,

(घ) व्यक्तिगत सक्षमता, दक्षता वा प्रतिभाबाट सेवा प्रदान गर्ने गरी करार भएकोमा त्यस्तो सेवा प्रदान गर्ने व्यक्तिको मृत्यु भएमा वा निजको होस ठेगानमा नरहेमा वा निजको शारीरिक वा मानिसक अशक्तताको कारणले करार पूरा गर्न नसक्ने भएमा ।

(३) उपदफा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि देहायका कुनै अवस्थामा करार गर्दाको परिस्थितिमा आधारभूत परिवर्तन भएको मानिने छैन :-

(क) करारको परिपालना गर्न कठिनाइ भएमा,

(ख) न्यून मुनाफा हुने वा नोक्सान हुने भएमा,

(ग) कुनै करार पूरा गर्न कुनै पक्ष सो करारको पक्ष नभएको कुनै तेस्रो पक्षमा आश्रित रहेकोमा त्यस्तो तेस्रो पक्षले गल्ती गरेमा वा निज असक्षम भएमा,

(घ) हडताल वा तालाबन्दी भएमा,

(ङ) थप कर, दस्तुर वा अन्य कुनै राजस्व तिर्नु परेमा,

(च) एकभन्दा बढी प्रयोजनको लागि करार भएकोमा तीमध्ये कुनै कुरा मात्र पूरा नहुने भएमा ।

(४) उपदफा (२) बमोजिम परिस्थितिमा आधारभूत परिवर्तन भै करारको परिपालना गर्न असम्भव भएमा देहायका कुराहरुमा देहाय बमोजिम हुनेछ :-

(क) परिस्थितिमा त्यस्तो परिवर्तन हुनु अघि करार बापत एक पक्षबाट भुक्तानी भएको रकम अर्को पक्षलाई फिर्ता गर्नु पर्नेछ ।

(ख) करार बापत एक पक्षले अर्को पक्षलाई भुक्तानी गर्नु पर्ने वा गर्न बाँकी रहेको रकम परिस्थितिमा त्यसरी परिवर्तन भएपछि भुक्तानी योग्य हुने छैन ।

(ग) परिस्थितिमा त्यस्तो परिवर्तन हुनु अघि कुनै पक्षले कुनै काम गरिसकेको वा रकम चुक्ता गरिसकेको भएमा सो काम वा रकमको हिसाब गरी एक अर्कालाई दिनु पर्ने रकम यकीन गर्नु पर्नेछ र सो करार बापत एक पक्षले गरेको मनासिब माफिकको खर्च अर्को पक्षबाट भराई लिन सक्नेछ ।

(५) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि उपदफा (२) को खण्ड (ख) को परिस्थिति अन्त्य भएपछि पक्षहरु करार परिपालना गरी आ-आफ्नो दायित्व पूरा गर्न सहमत हुन सक्नेछन् ।

८०. **सुविधा दिनु पर्ने** : करार गर्ने पक्षहरुले एक अर्कालाई आफ्नो तर्फबाट करारको परिपालना गर्न आवश्यक पर्ने सुविधा दिनु पर्नेछ । त्यस्तो सुविधा नदिएको कारणबाट करार परिपालना हुन नसकेमा त्यसरी परिपालना गर्न नसक्ने पक्ष उत्तरदायी हुने छैन ।

८१. **करार निलम्बन वा हेरफेर हुन सक्ने** : (१) करार गर्ने पक्षको मञ्जुरी भएमा करार बमोजिम गर्नु पर्ने कामको सम्पूर्ण वा कुनै अंश हेरफेर वा संशोधन गर्न वा करार बमोजिम गर्नु पर्ने कामको अवधि बढाउन वा करार बमोजिम गर्नु पर्ने काम केही समयको लागि गर्नु नपर्ने गरी करारको निलम्बन गर्न वा करारमा उल्लेखित कामको सट्टा अन्य कुनै काम गर्न वा सो करारको सट्टा अर्को कुनै करार गर्न सकिनेछ ।

(२) उपदफा (१) बमोजिम करारमा हेरफेर वा संशोधन भएमा नयाँ करार भएको मानिनेछ र सोही बमोजिम करार प्रभावकारी हुनेछ । यसरी नयाँ करार भएकोमा सो करारमा अन्यथा व्यवस्था भएकोमा बाहेक शुरुको करार बमोजिमको दायित्व व्यहोर्नु पर्ने छैन ।

## परिच्छेद-१२

## करारको उल्लंघन र उपचार

८२. **करारको उल्लंघन** : (१) करारको कुनै पक्षले करार बमोजिमको दायित्व पूरा नगरेमा वा करार बमोजिम आफूले गर्नु पर्ने काम निजले नगर्ने भएको कुराको सूचना अर्को पक्षलाई दिएमा वा पक्षको काम कारबाही र आचरणबाट निज करार बमोजिमको काम गर्न असमर्थ देखिएमा निजले करार उल्लंघन गरेको मानिनेछ ।

(२) उपदफा (१) बमोजिम एक पक्षले करार उल्लंघन गरेकोमा वा निजको काम कारबाही वा आचरणबाट निजले आधारभूत रुपले करारको पालना नगरेको देखिएमा अर्को पक्ष सो करार

परिपालना गर्न बाध्य हुने छैन र त्यस्तो पक्षले अर्को पक्षलाई सूचना दिई सो करार रद्द गर्न सक्नेछ ।

८३. **करार उल्लंघन भएमा त्यसको क्षतिपूर्ति** : (१) दफा ८२ बमोजिम करार उल्लंघन भएकोमा सोबाट मर्का पर्ने पक्षले त्यस्तो उल्लंघनबाट भएको वास्तविक वा करार गर्दाको अवस्थामा त्यस्तो हानि नोक्सानी हुन सक्छ भनी करारका पक्षहरुलाई जानकारी भएको हानि नोक्सानी त्यसरी करार उल्लंघन गर्ने पक्षबाट भराई लिन पाउनेछ ।

(२) करार उल्लंघन भएमा कुनै निश्चित रकम सो बापत वा क्षतिपूर्ति बापत पाउने भनी करारमा उल्लेख भएकोमा सो बमोजिमको रकममा ननाघ्ने गरी मर्का पर्ने पक्षले अर्को पक्षबाट मनासिब माफिकको रकम भराई लिन पाउनेछ ।

(३) उपदफा (२) बमोजिमको क्षतिपूर्ति उल्लेख नभएकोमा त्यस्तो क्षतिपूर्ति दावी गर्ने पक्षले करारको उल्लघंनबाट प्रत्यक्ष र वास्तविक रुपमा भएको हानि नोक्सानी बापत वा करार उल्लंघन भए बापत वा क्षतिपूर्ति बापत मनासिब माफिकको रकम भराई लिन पाउनेछ । अप्रत्यक्ष वा काल्पनिक हानि नोक्सानी भराई लिन पाउने छैन ।

(४) कुनै निश्चित समयावधिभित्र कुनै काम पूरा गर्ने गरी करार भएकोमा त्यस्तो अवधिभित्र त्यस्तो काम पूरा हुन नसकेकोमा उपदफा (२) बमोजिमको क्षतिपूर्ति पाउने अवस्था रहेछ भने त्यस्तो क्षतिपूर्ति तिर्ने पक्षले जति रकम क्षतिपूर्ति तिरेकोछ सोही अनुपातमा करार पूरा गर्ने समयावधि बढाउन माग गर्न सक्नेछ ।

८४. **करार रद्द वा बदर भएमा त्यसको क्षतिपूर्ति** : (१) करार गर्ने कुनै पक्षले अर्को पक्षबाट करार बमाजिम केही नगद, जिन्सी वा अन्य कुनै लाभ लिई सकेपछि वा करार बमोजिमका दायित्वहरु आंशिक रुपमा पूरा गरी सकेपछि पक्षहरुको सहमतिबाट करार रद्द भएमा वा यस ऐन वा अन्य प्रचलित कानून बमोजिमको करारको परिपालना गर्नु नपर्ने भएमा वा कानून बमोजिम बदर भएमा वा यस ऐन बमोजिम अमान्य वा रद्द भएमा त्यसरी दिएको नगद वा जिन्सी करार बहाल रहेको दिनसम्मको हिसाब मिलान गरी फिर्ता गर्नु पर्ने नगद वा जिन्सी फिर्ता गर्नु पर्नेछ । नगद वा जिन्सी बाहेक अन्य कुनै सेवा वा लाभ दिएको भए त्यस्तो सेवा वा लाभ दिए बापत मनासिब माफिकको रकम त्यस्तो सेवा वा लाभ लिने पक्षले अर्को पक्षलाई दिनु पर्नेछ ।

........✂

✂ केही नेपाल ऐनलाई संशोधन गर्ने ऐन, २०६४ द्वारा भिकिएको ।

(२) उपदफा (१) बमोजिमको नगद, जिन्सी फिर्ता नगरेको वा रकम नदिएको कारणबाट कानूनी कारबाही अवलम्बन गर्नु पर्ने भएमा सो बापत लागेको मनासिब खर्च समेत भराई लिन सकिनेछ ।

८५. **मनासिब रकम भराउन सक्ने** : देहायको कुनै अवस्थामा मर्का पर्ने पक्षले आफूले गरेको काम वा बुझाएको नगद वा जिन्सी बापत सोको अनुपातमा भुक्तानी पाउन दावी गर्न सक्नेछ :-

(क) करार बमोजिम काम गरिसकेको वा गरिरहेकोमा अर्को पक्षको गल्तीले करार अन्त्य भएमा,

(ख) निशुल्क दिने स्पष्ट अभिप्राय नराखी दिइएको कुनै सेवा वा वस्तु अर्को पक्षले उपभोग गरेमा ।

८६. **करारको यथावत परिपालना** : (१) करार उल्लंघन भएको कारणबाट मर्का पर्ने पक्षलाई पुग्न गएको वास्तविक हानि नोक्सानी बापत नगद क्षतिपूर्ति मनासिब र पर्याप्त नहुने भएमा त्यसरी मर्का पर्न गएको पक्षले क्षतिपूर्तिको दावी गर्नुको सट्टा करारको यथावत् परिपालनाको दावी गर्न सक्नेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि देहायको कुनै अवस्थामा यथावत् परिपालनाको दावी लाग्ने छैन :-

(क) करार उल्लंघन बापतको क्षतिपूर्ति नगद नै पर्याप्त हुने भएमा,

(ख) करार बमोजिमको काम भए नभएको कुरा अदालतले सुपरिवेक्षण गर्न नसक्ने भएमा,

(ग) व्यक्तिगत दक्षता, सीप वा ज्ञानको सेवा उपलब्ध गराउने गरी करार गरिएको भएमा,

(घ) यथावत् रुपमा करार पूरा गर्न सक्ने अवस्था नभएमा,

(ङ) करार उल्लंघन गर्ने पक्षले नै यथावत् परिपालना गराई पाउने दाबी लिएकोमा ।

८७. **अदालतले आदेश दिन सक्ने :** (१) करारको कुनै पक्षले सो करारको प्रकृति अनुसार गर्न नहुने कुनै काम कारबाही वा व्यवहार गर्न लागेको कारणबाट करारको परिपालना सम्भव नहुने भएमा त्यस्तो काम कारबाही वा व्यवहारबाट मर्का पर्ने पक्षले त्यस्तो काम कारबाही वा व्यवहार रोकी पाउन पुनरावेदन अदालतमा उजुरी दिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम उजुरी परेमा प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि सो करारबाट उत्पन्न विवादको समाधान सो करार वा प्रचलित कानून बमोजिम हुने गरी

कुनै पक्षलाई निजको कुनै खास काम कारबाही वा व्यवहार तत्काल रोक्ने गरी उपयुक्त आदेश जारी गर्न सक्नेछ।

(३) त्यसरी आदेश जारी भएकोमा त्यस्तो पक्षले उपदफा (२) बमोजिमको आदेशको पालना नगरेको कारणबाट हुन गएको थप हानि नोक्सानी समेत मर्का पर्ने पक्षले भराई लिन पाउनेछ।

## परिच्छेद-१३

## विविध

८८. **प्रचलित कानूनको पालना गर्नु पर्ने** : प्रचलित कानूनले कुनै खास प्रकारको करार गर्न कुनै खास कार्यविधि पूरा गर्नु पर्ने व्यवस्था गरेको वा कुनै सरकारी कार्यालयमा रजिष्ट्रेशन गर्नु पर्ने व्यवस्था गरेको रहेछ भने त्यस्तो रीत पूरा नगरी भएको करार मान्य हुने छैन।

८९. **हदम्याद :** (१) कुनै खास करार वा करार सम्बन्धी कुनै खास विषयमा प्रचलित कानूनमा कुनै खास हदम्याद तोकिएको रहेछ भने सो सम्बन्धमा सोही हदम्याद कायम हुनेछ।

(२) उपदफा (१) मा लेखिएको बाहेक देहायका करार वा विषयमा देहायको हदम्यादभित्र उजुरी नदिएमा उजुरी लाग्ने छैन :-

(क) बदर हुने करारमा बदर घोषित गराउन जहिलेसुकै पनि,

(ख) बदर गराउन सकिने करारको हकमा बदर गराउन पाउने पक्षले बदर गराउनु पर्ने कारण थाहा पाएको मितिले एक वर्षभित्र,

(ग) परिच्छेद-७ मा उल्लिखित करारका हकमा मुद्दा गर्नु पर्ने कारण उत्पन्न भएको मितिले दुई वर्षभित्र,

(घ) यस ऐन अन्तर्गत अन्य कुनै दावीका सम्बन्धमा त्यस्तो दावीका लागि मुद्दा गर्नु पर्ने कारण उत्पन्न भएका मितिले दुई वर्षभित्र।

९०. **खारेजी र बचाउ** : करार सम्बन्धी ऐन, २०२३ तथा मुलुकी ऐन नासो धरौटको महल खारेज गरिएका छन्।